नेपाली सङ्घीय समाज युकेको स्मारिका

# सोसलिष्ट

September, 2016

# SOCIALIST



# नेपाली सङ्घीय समाज, युके केन्द्रीय समिति
## (सन् २०१४ - २०१६)





**धर्मबहादुर तामाङ**
अध्यक्ष





**जंगबहादुर सुनुवार**
वरिष्ठ उपाध्यक्ष



**इन्द्र कार्की**
उपाध्यक्ष



**बसुन्धरा यारूखा**
उपाध्यक्ष



**राजेन्द्र खिम्दिङ**
उपाध्यक्ष



**बालकृष्ण राई**
उपाध्यक्ष



**देव गुरुङ**
उपाध्यक्ष



**योगेश राई**
उपाध्यक्ष



**विश्वासहाङ खेवाहाङ**
महासचिव



**कमल प्र राई**
उपमहासचिव



**मिलन राई**
सचिव



**जगत गुरुङ**
सचिव



**ईश्वर चाम्लिङ**
सचिव



**नरेश काडमाड**
प्रवक्ता



**विमला राई**
आर्थिक सचिव



**दावा स्याङ्बो**
आर्थिक उपसचिव



**दसरथ राई**
सदस्य



**सूर्य कार्की**
सदस्य



**टिकाधन राई**
सदस्य



**रत्न थापामगर**
सदस्य



**अनिता गुरुङ**
सदस्य



**सुशीला वाइबा**
सदस्य



**सन्तवीर नेम्बाङ**
सदस्य



**सुमित्रा राई**
सदस्य



**जानुका राई**
सदस्य



**जित पाखिन**
सदस्य



**चक्र राई**
सदस्य



**मान ब. राई**
सदस्य



**राज राई**
सदस्य



**नवीन थापा**
सदस्य



**विकास बस्नेत खस**
सदस्य



**भगवान चाम्लिङ**
वैकल्पिक केन्द्रीय सदस्य (नेपाल)



**टेक बहादुर थापा राजेश**
वैकल्पिक केन्द्रीय सदस्य (नेपाल)

# प्रकाशकीय

युकेमा रहनु भएका सम्पूर्ण न्याय र समानताका पक्षधर आदरणीय दाजुभाइ तथा दिदीबहिनीहरू !

नेपाली सङ्घीय समाज युके विभिन्न चुनौतीहरूको बाबजुद पनि जुझारू रूपबाट निरन्तर अघि बढिरहेको छ । एकातिर हाम्रो मातृभूमिलाई भ्रष्ट र दलालहरूले जुवाघर बनाइरहेका छन् भने अर्कोतिर जातीय र वर्गीय विभेद झनै बढ्दो छ । हाम्रो बसाई नयाँ ठाँउमा भएकोले यहाँको बारेमा पनि धेरै बुझ्नुपर्ने अर्को चुनौती छ । हामी यी दुवै कामलाई सङ्गठनात्मक शक्ति र आपसी सहयोगबाट सम्पन्न गर्न सक्दछौं र परिवर्तनको निम्ति प्रतिबद्ध छौं ।

नेपाली सङ्घीय समाज एउटा परिवार भएकोले दु:खसुख हामीबीचमा आदानप्रदान हुन सकोस् । दु:खमा परेकालाई साथ दिन नचुकौं र प्रतिदिन नयाँ कुरा सिक्दै जाऔं । तपाईलाई कुनै सारो-गारो भएमा हामीलाई पनि शेयर र सम्पर्क गर्नु अनुरोध गर्दछौं । आपसमा मिलेर धेरै कुरा गर्न सक्दछौं । सङ्गठन नै शक्ति हो । प्रतिदिन राम्रा र नयाँ कुराहरूलाई अवलम्बन गर्दै जाऔं ।

अन्त्यमा, जातीय मुक्तिका लागि सङ्घीयता र वर्गीय मुक्तिका लागि समाजवाद भन्ने नारालाई सधैं ख्याल गरौं । र, एकमुठ्ठी सास रहुञ्जेल न्याय र मुक्तिका लागि लडिरहने वाचा गरौं भन्ने आग्रहसहित हाम्रा गतिविधि तथा भावी योजनाहरूका साथ 'सोसलिष्ट' नामक स्मारिकामा लिएर आएका छौं । आशा छ, सोसलिष्ट हामी सबैका लागि उपयोगी हुनेछ ।

जय सङ्घीय समाजवाद ।

*नेपाली सङ्घीय समाज, युके परिवार*

नेपाली सङ्घीय समाज युकेको स्मारिका

# सोसलिष्ट

**September, 2016**

**प्रधान सम्पादक**
विश्वासदीप तिगेला

**सम्पादक**
कमलप्रसाद राई
जगत गुरूङ
मिलन राई

**व्यवस्थापक**
विमलाकुमारी राई

**शुद्धाशुद्धि**
अमित थेबे

**प्रकाशन वर्ष**
सेप्टेम्बर, २०१६

**ले-आउट**
बद्री अधिकारी


**सम्पर्क**
federalSocialist.uk@gmail.com
www.nepaleseSociety.co.uk





## उपप्रधानमन्त्री थापासँगको लण्डन कार्यक्रम रद्द




## सङ्घीय समाजवादी पार्टीको घोषणा : संसारभर हर्षोउल्लास




## केहो नेपाली क्रान्तिको मार्गदर्शक सिद्धान्त सङ्घीय समाजवाद ?

# अध्यक्षको सन्देश

प्रथम ऐतिहासिक महाधिवेशनबाट निर्माण भएको सन् २०१४-१६ को कार्यसमितिले पार्टीहित र जनहितको पक्षमा विभिन्न उल्लेख्य कामहरू गर्न सफल भयो ।

यी सफलताहरूका निमित्त सहयोग गर्नुहुने, विशेष भूमिका निर्वाह गर्नुहुने तथा प्रत्यक्ष र अप्रत्यक्ष सहयोग गर्नुहुने सबै महानुभावहरूलाई यो कार्यकालको अन्त्यमा म र मेरो कार्यसमितिको तर्फबाट हार्दिक धन्यवाद तथा आभार व्यक्त गर्दछु ।

साथै, नवनिर्वाचित सम्पूर्ण शाखाका नेतृत्व र दोस्रो ऐतिहासिक महाधिवेशनबाट बन्ने नेतृत्वलाई कार्य सफलताको मङ्गलमय कामना गर्दछु ।

धर्मबहादुर तामाङ
अध्यक्ष
नेपाली सङ्घीय समाज, युके राष्ट्रिय समिति

# विषयक्रम

## विचार



## कविता



## दस्तावेज

# नेपाली सङ्घीय समाज युके सङ्क्षिप्त परिचय



स्थायी वा अस्थायी रूपबाट युकेमा बसोबास गर्दै आएका न्याय र समानताका पक्षधरहरूको सङ्गठन नै नेपाली सङ्घीय समाज, युके हो । नेपालको पृष्ठभूमिबाट आएका कारण यस समाज पितृभूमि नेपालमा सबल सङ्घीय प्रणालीको अवधारणामा विश्वास राख्दछ ।

लामो समयदेखिको यथास्थिति, एकात्मकवादी प्रणालीको कारण विकास, प्रगति र समतामूलक समाज निर्माण हुन नसकेको ठहर गर्दै हामी वैचारिक रूपबाट अन्यहरूको तुलनामा गुणौ अगाडि रहेको आत्माविश्वास राख्दै सबै जातिलाई अगाडि लगेर मात्र सिङ्गो मुलुक अगाडि जान सक्दछ भन्ने हाम्रो ठहर रहेको छ ।

युकेमा रहनु निश्चय नै हाम्रो लागि नयाँ चुनौती हो भने यहाँ रहदै गर्दा विभिन्न समस्याहरूसँग जुधिरहनु परेको बेग्लै विवशता छ । युकेमा रहेका नेपालीहरूबीच आपसमा भातृत्व कायम गरी सहयोग र सद्भाव बढाउँदै आइपर्ने अनेक समस्याहरूलाई समाधान गर्न सकिन्छ । मातृभूमि र कर्मभूमिलाई योगदान गर्न सकिन्छ भन्ने मान्यताका आधारमा नेपाली सङ्घीय समाज निर्माण भई क्रियाशील रहेको छ ।

हामी न्याय र समानताका पक्षधर प्रत्येक व्यक्ति र समूहलाई सहकार्य र एक्ताका लागि हार्दिक अनुरोध गर्दछौं । सन् २०१२ डिसेम्बर २२ का दिन स्थापित नेपाली सङ्घीय समाजका विभिन्न ७ भन्दा बढी क्षेत्रीय समितिहरू क्रियाशील रहेका छन् ।

# नेपाली सङ्घीय समाज युकेको लण्डन शाखामा पूर्ण लिम्बु चयन

गत २ सेप्टेम्बर २०१६ का दिन साउथ हयारोको एभरेष्ट सुपरमार्केटको सभाकक्षमा नेपाली सङ्घीय समाज लण्डन शाखाको दोस्रो अधिवेशन सम्पन्न भएको छ ।

अधिवेशनले पूर्ण लिम्बु फालेच्छ्वालाई अध्यक्ष, शान्तकला राईलाई उपाध्यक्ष र लोप्साङ छिरिङ हयाल्मो लामालाई सचिवमा चयन गरेको छ । कोषाध्यक्षमा मदन कोयू र सदस्यहरूमा क्रमशः ढकबहादुर रानामगर, शान्त राई, सुस्मा राई, अन्जना राई, टेक गुरूङ, राजकुमार राई, तारा गुरूङ, कृष्णबहादुर राई, कुमारी राई, भूराज राई, सुवासश्री मगर, खुमबहादुर गर्बुजा पुन चयन हुनु भएको छ । त्यसैगरी सल्लाहकारमा क्रमशः चन्द्रबहादुर गुरूङ, बम प्रसाद राई, मुकुन्द सुनुवार र गोपाल कृष्ण राई चयन हुनु भएको छ ।

युके केन्द्रीय समितिका प्रवक्ता नरेश काङमाङ राईको उपस्थितीमा अधिवेशन सम्पन्न भएको थियो । नवनिर्वाचित लिम्बु धनकुटा जिल्ला सेवा समाज युकेका उपाध्यक्ष तथा समाजसेवी हुनुहुन्छ ।

# फक्स्टोन शाखामा जयबहादुरको नेतृत्व

गत २० अगष्ट २०१६ का दिन चेरिटनको लेमनलिफमा भएको एक भेलाले नेपाली सङ्घीय समाज फक्स्टोन शाखा जयबहादुर तामाङको अध्यक्षतामा गठन भएको छ ।

समितिको उपाध्यक्षमा भक्तबहादुर राई, सचिवमा महाप्रसाद राई, सहसचिव हरि राई, सिरी गुरूङ, कुमार राई र अधिवेशन प्रतिनिधि रि. क्याप्टेन सुमनचन्द्र राई र रि. मेजर देवबहादुर पुन चयन हुनुभयो भने सल्लाहकारमा शिवधन राईलाई चयन गरिएको छ । भेलामा युके समिति केन्द्रीय महासचिव विश्वासहाङ खेवाहाङको उपस्थिति रहेको थियो ।

# आसफोर्ड शाखामा विनोद सुब्बा

गत १४ अगष्ट २०१६ का दिन नेपाली सङ्घीय समाज आसफोर्ड शाखाको प्रथम अधिवेशनले विनोद सुब्बालाई अध्यक्षमा निर्वाचित गरेको छ । उपाध्यक्षमा प्रश्न राई, सचिवमा अमित थेवे, कोषाध्यक्षमा मनबहादुर माबोहाङ चयन हुनुभएको छ भने सदस्यहरूमा क्रमशः जितेन्द्र चेम्जोङ, डम्बर खजुम, असई राई, देवराज राई, पपीराज राई र राम राई रहनु भएको छ । सल्लाहकारहरूमा शाखाका पूर्व अध्यक्ष जीवनकुमार राई, राजेन्द्र खिम्दिङ, दिल सम्बाहाम्फे र विश्वासहाङ खेवाहाङ चयन हुनु भएको छ ।

नवनिर्वाचित पदाधिकारीहरूलाई केन्द्रीय वैकल्पिक सदस्य भगवान चाम्लिङले सपथ खुवाउनु भएको थियो भने तमुवान प्रदेश समिति युके इञ्चार्ज तथा सल्लाहकार कमल गुरूङले वैकल्पिक शक्तिका रूपमा स्थापित सङ्घीय समाजवादी फोरम, नेपाललाई अझ व्यापक विस्तार गर्नुपर्ने विचार राख्नु भयो । त्यस्तैगरी, युके राष्ट्रिय समितिका उपाध्यक्ष राजेन्द्र खिम्दिङले लिम्बुवान, खम्बुवान, तमुवान लगायतका राज्यहरू प्राप्तिका निम्ति राष्ट्रिय शक्ति सङ्घीय समाजवादी फोरम नेपालबाट मात्र सम्भव रहेको र क्षेत्रीय पार्टीहरूबाट सम्भव नदेखिएको बताउनु भयो । युके समितिका



महासचिव विश्वासहाङ खेवाहाङले चाँडै नै अन्य शाखाहरू पनि विस्तार गर्नुका साथै लिम्बुवान प्रदेश समिति निर्माण गरिने बताउनु भयो ।

नवनिर्वाचित अध्यक्ष सुब्बाले आफूले जाने र सकेजति, बलबुताले भ्याएसम्म न्याय र समानताका लागि काम गर्ने प्रतिबद्धता जाहेर गर्दै सबैबाट सहयोगको अपेक्षा गर्नुभयो । निवर्तमान अध्यक्ष जीवनप्रकाश राईले आफ्नो नेतृत्वमा रहेको समितिको विघटन घोषणा लगत्तै नयाँ नेतृत्व चयनको प्रकृया अघि बढेको थियो । नयाँ नेतृत्वको घोषणा, सपथ र प्रतिबद्धतापछि अधिवेशनको समापन निवर्तमान अध्यक्ष राईले गर्नुभयो । सङ्घीय समाजवादी फोरम, नेपालको प्रवास अङ्ग सङ्घीय नेपाली समाज युकेका विभिन्न ६ शाखाहरू रहेका छन् र आगामी २५ सेप्टेम्बर का दिन दोस्रो राष्ट्रिय महाधिवेशन लण्डन नजिक अल्डरसटमा हुँदैछ । *- राजु सुब्बाबाट*

# अध्यक्ष र वरिष्ठ नेतालाई निम्त्याइने





गत ३० मे २०१६ का दिन लण्डनको चिस्वीक कम्युनिटी हलमा सङ्घीय समाजवादी फोरम, युके केन्द्रीय समितिको बैठक सम्पन्न भयो । जारी सङ्घीय गठबन्धन आन्दोलनलाई हरप्रकारको सहयोग गर्दै ऐक्यबद्धता जनाएको छ । पार्टी एकीकरण र जारी आन्दोलनले पार्टीको विस्तार, व्यापकता र पार्टीप्रति जनताको आकर्षण ह्वात्तै बढेको निष्कर्ष निकाल्दै युकेमा अरू व्यापकता दिने निर्णय गऱ्यो । युकेमा रहेका पार्टीका नेता, कार्यकर्ता तथा आस्थावानबीच भेटघाट गराउने उद्देश्यले यहीं २५ जुनका दिन लण्डन साउथ ह्यारोमा बिबिक्यू पार्टी गर्ने र आगामी सेप्टेम्बरमा हुने पार्टीको दोस्रो महाधिवेशनमा पार्टी केन्द्रीय अध्यक्ष उपेन्द्र यादव र वरिष्ठ नेता अशोक राईलाई निम्तो गर्ने निर्णय गऱ्यो । साथै, सङ्घीय गठबन्धन नजिकका शक्तिहरूसँग मिलेर लण्डन पार्लियामेन्ट अगाडि असफल संविधान र गलत सिमाङ्कनको ७ प्रदेश विरूद्ध दबाबमूलक कार्यक्रम गर्ने पनि निर्णय गऱ्यो ।

पार्टीका युके समितिका अध्यक्ष धर्मबहादुर तामाङको अध्यक्षतामा सम्पन्न बैठकलाई केन्द्रीय वैकल्पिक सदस्य भगवान चाम्लिङको समेत उपस्थिति रहेको थियो । बैठक महासचिव विश्वासहाङ खेवाहाङ र उपमहासचिव कमलप्रसाद राईले पालैपालो सञ्चालन गर्नुभएको थियो । समाजवादी फोरमलाई नेपाली सङ्घीय समाज पनि भनिन्छ । यस समाजको युकेभर ६ शाखाहरू रहेका छन् ।

*- राजु सुब्बाबाटबाट*

# खोटाङलाई सहयोग गर्ने युकेमा समिति

गत १० अप्रिल २०१६ का दिन सङ्घीय समाजवादी फोरम, नेपालको खोटाङ जिल्ला समितिलाई सहयोग पुऱ्याउने उद्देश्यले युकेमा बसोबास गर्ने खोटाङहरूको एक भेलाले सङ्घीय खोटाङ समाज, युके गठन गरेको छ ।

नवगठित समितिका पदाधिकारीहरू अध्यक्ष कृतबहादुर राई (सुङ्देल), त्रय उपाध्यक्षहरू मेजर रि. इन्द्रप्रसाद राई (बाक्सिला), जानुका राई, (बाम्राङ), दैवराम राई, (लफ्याङ), सचिव देवेन्द्र राई (निर्मलीडाँडा), सहसचिव कमल प्रसाद राई (जलेश्वर), कोषाध्यक्ष मिलन चन्द्र राई (फेदी), सह-कोषाध्यक्ष भविन रोशन राई (फेदी) चुनिनुभएको छ ।

यसैगरी सदस्यहरूमा क्रमशः डा. प्रमोद राई, (सुङ्देल), सुमित्रा राई (खाल्ले), विमला राई, (लफ्याङ), ध्रुव राई (चिसापानी), गोपालकृष्ण राई (दिक्तेल), हरि राई (निर्मलीडाँडा), मौल राई (सोल्मा), शिव राई (बाक्सिला), दशरथ राई (बुइँपा), अनिल राई (मात्तिम), योगेन राई (सुङ्देल) विनोद राई (दिप्लुङ), सिङ्घराज राई (च्यानडाँडा), धन तामाङ (खार्मी), शान्ति राई (लफ्याङ), अशोक राई (चिप्रिङ), चन्द्र राई (निर्मलीडाँडा) छानिनुभएको छ ।

यसैगरी सल्लाहकारहरूमा भगवान चाम्लिङ (चिप्रिङ), मेजर योगेश राई (सुङ्देल) रत्न राई (चुइचुमा), अगमसिंह राई (सुङ्देल) र रत्नकुमार राई (रतन्छा) लाई मनोनयन गरिएको छ ।

# साधारणसभा तथा समायोजन कार्यक्रम

गत ९ जनवरी २०१६ का दिन नेपाली सङ्घीय समाज युकेको वार्षिक साधारणसभा तथा खस समावेशी पार्टी र सङ्घीय समाजवादीको युके अङ्गबीच समायोजन कार्य सम्पन्न भएको छ ।

केन्द्रीय सल्लाहकार लक्ष्मण तुलाचन र वैकल्पिक केन्द्रीय सदस्य पीजी शेर्पाको प्रमुख आतिथ्य र वैकल्पिक केन्द्रीय सदस्यद्वय भगवान चाम्लिङ र टेकबहादुर थापा (राजेश)को उपस्थितिमा सभा सम्पन्न भएको थियो । नेपाली राष्ट्रगान लगत्तै जारी आन्दोलनमा शहादत प्राप्त गर्नुभएका ५५ जना शहीदहरूप्रति एक मिनेट मौन धारणा गरेर सुरू भएको सभामा प्रमुख अतिथि शेर्पाले तराईमा जारी आन्दोलनमा साम्प्रदायिक नरसंहार मच्चाएकोमा अहिलेको सरकारविरूद्ध अन्तर्राष्ट्रिय अदालत हेगमा मुद्दा दर्ता गर्ने प्रकृयामा रहेको बताउनुभयो ।




त्यस्तैगरी, विश्वको सबैभन्दा ठूलो मानवअधिकारवादी संस्था एमनेष्टी इन्टरनेशनलमा नेपाल सरकारका तर्फबाट प्रहरीको अमानवीय दमनका भिडियो तथा फोटोहरू दर्ता गरिसकेको बताइएको छ । भेलाले चाँडै आन्दोलनमा शहादत प्राप्त गरेका शहीदहरूका फोटा तथा निर्मम हत्याको फोटा ब्यानर टाँगेर युके पार्लियामेन्ट गेटमा धर्ना दिने पनि निधो गरेको छ । नेपालका भ्रष्ट, लाचार र गैरजिम्मेवार सरकारलाई असल सहयोगी राष्ट्रको हिसाबले युके सरकारले पनि दबाब दिनुपर्ने वक्ताहरूको धारणा थियो ।

केन्द्रीय सदस्य थापाले मस्टो धर्म मान्ने खसान क्षेत्रका आदिवासीहरूलाई हिन्दुकृत गरिएको, वर्णाश्रम नभएका खसहरूलाई वर्णाश्रमकृत गरिनु सबैभन्दा दुर्भाग्य बताउनुभयो । खस आर्य शब्द जोडिनु षड्यन्त्र भएको र खसक्षेत्रीको सङ्ख्या देखाएर अहिलेका शासकहरूले धेरै भाग लिएको उल्लेख गर्नुभयो । प्रवक्ता नरेश काङमाङले खस समावेशी पार्टी नेपाल युके समितिको तर्फबाट उपाध्यक्षमा इन्द्र खस कार्की, सदस्यहरूमा नवीन थापा, विकेश बस्नेत, सूर्य कार्की र सल्लाहकारमा राजेन्द्र बस्नेतसहित सङ्घीइ समाजमा समाहित भएको घोषणा गर्नुभयो ।

यस समायोजसँगै नेपाली सङ्घीय समाज युकेको ३३ जना रहेको समिति बन्न पुगेको छ भने समितिमा ६ जना उपाध्यक्षहरू रहनु भएका छन् । उहाँहरूलाई प्रमुख अतिथिले सपथ खुवाउनु भएको थियो । सङ्घीय समाज युकेको लगानीमा गायक भगवान चाम्लिङको एकल स्वरबद्ध 'परिवर्तनका पाइलाहरू' जनवादी गीति एल्बमको सामूहिक विमोचन पनि गरिएको थियो ।

सङ्घीय समाज बेल्जियमका अध्यक्ष नेत्र मगर, पूर्व केन्द्रीय प्रतिनिधि चण्डीराज राई, सल्लाहकार कमल गुरूङ, जनजाति महासङ्घ युकेका महासचिव कर्म शेर्पा पहाडी, सल्लाहकार छेत्रकला राई, उपाध्यक्ष इन्द्र कार्की, शाखा समितिका तर्फबाट बलबहादुर राई, कुवेर होडा लगायतले बोल्नु भएको थियो । दोस्रो चरणको बन्द सत्रमा अनुसासन विभाग संयोजक तथा उपाध्यक्ष राजेन्द्र खिम्दिङ लिम्बुले पार्टीको अनुसासन विषयमा बोल्नु भयो । त्यस्तै कोषाध्यक्ष विमला राईले आर्थिक प्रतिवेदन र महासचिव विश्वासहाङ खेवाहाङले साङ्गठानिक प्रतिवेदन प्रस्तुत गर्नुभयो । सामान्य संशोधनसहित साङ्गठानिक प्रतिवेदन पारित भयो ।

रश्मिप्रसादको गायनले थप मनोरञ्जन प्रदान गरेको कार्यक्रमको उद् घाटन प्रमुख अतिथि शेर्पा, विशेष अतिथि सल्लाहकार तुलाचन र समाजका अध्यक्ष तथा सभाका अध्यक्ष धर्म तामाङद्धारा सङ्क्त रूपमा उद्घाटन गरिएको थियो । समारोहमा वरिष्ठ उपाध्यक्ष जंग सुनुवारले स्वागत गर्नुभएको थियो । कार्यक्रमलाई महासचिव खेवाहाङ र उपमहासचिव कमलप्रसाद राईले सञ्चालन गर्नुभएको थियो ।

> **नेपालका भ्रष्ट, लाचार र गैरजिम्मेवार सरकारलाई असल सहयोगी राष्ट्रको हिसाबले युके सरकारले पनि दबाब दिनुपर्ने वक्ताहरुको धारणा थियो ।**

# युकेमा उपप्रधानमन्त्री थापाको विरोध

लण्डन, गत १७ डिसेम्बर २०१५ का दिन उपप्रधान तथा परराष्ट्रमन्त्री कमल थापासँग गोर्खा सत्याग्रह समिति युकेले गर्ने भनिएको कार्यक्रम दूतावासले समय नदिएका कारण रद्ध भएको जनाइएको छ ।

कार्यक्रम रद्ध भएको जानकारी भएपनि मन्त्री थापाको विरोध गर्न ३ दर्जन आदिवासी जनजातिहरू दूतावासको गेटमा ब्यानर र प्ले कार्डसहित जम्मा भएका थिए । संविधानको विरोध गरिएको र मन्त्री थापालाई युकेमा स्वागत छैन, संविधानको पुनर्लेखन गर, तराईमा मच्चाएको नरसंहार बन्द गर, तराईको जारी आन्दोलनमा मारिएका ५५ जनालाई न्याय दे आदि प्लेकार्डहरू लिएर प्रर्दशन गरेका थिए । मन्त्री थापालाई बुझाउन तयार गरिएको विरोधपत्र कार्यवाहक राजदूतलाई बुझाइएको थियो । विरोध प्रदर्शनमा स्थानीय प्रहरी र मिडियाहरूको पनि उपस्थिति रहेको थियो ।

नेपाल आदिवासी जनजाति महासङ्घ युकेको आयोजनामा सम्पन्न विरोध कार्यक्रममा नेपाली सङ्घीय समाज, गणतान्त्रिक जनमुक्ति समाज, सङ्घीय लिम्बुवान समाज (लिङदेन पक्ष)का पदाधिकारीहरूको उपस्थिति थियो । 'हामीले वर्तमान सरकारको रवैया, बेइमानी र गम्भीर त्रुटी रहेको संविधान



जारी गरेको कारण विरोध गरेको हो' भनी महासङ्घ अध्यक्ष तुल छन्त्यालले बताउनु भयो । वर्तमान सरकारविरूद्ध यो पहिलो चरण विरोध मात्र भएको र दोस्रो र महत्वपूर्ण चरण सुरू भइसकेको महासचिव कर्म पहाडी शेर्पाले बताउनु भयो ।

मन्त्री थापा गोर्खा भर्तीको दुई सय वर्षगाँठ मनाउन नेपाल सरकारको तर्फबाट लण्डन आएका थिए । वर्षगाँठको कार्यक्रम गत १६ डिसेम्बरका साँझ सम्पन्न भएको थियो । युके सरकारबाट आयोजित वर्षगाँठ समारोहको स्वागत ढोकामा विरोध गरेर बसेका सङ्घीयवादी मोर्चा तथा मधेसीहरूको कारण मन्त्री थापा पछाडिबाट सुटुक्क प्रवेश गरेका थिए । वर्षगाँठ समारोहमा भूतपूर्व गोर्खाजन्य कुनै पनि संस्थाका पदाधिकारीहरू थिएनन् र दूतावास नजिककाहरूको मात्र सहभागिता रहेको एक सहभागी धर्म तामाङले बताउनु भयो ।




# उपप्रधानमन्त्री थापासँगको लण्डन कार्यक्रम रद्द

लण्डन, १६ डिसेम्बर २०१५ । नेपाल र ब्रिटिस सरकारबीच सम्बन्ध स्थापना भएको दुई सय वर्षगाँठको अवसरमा सहभागी हुन आएका उपप्रधान तथा परराष्ट्रमन्त्री कमल थापाको चर्को विरोध भएको थियो ।

भव्य समारोहमा सबै विशिष्ट पाहुनाहरू मुख्यद्धारबाट छिरेपनि कमल थापा प्लेकार्डसहित गेटैमा विरोध गरी बसेका मधेसी, आदिवासी जनजातिहरूको विरोध छल्न पछाडि बाटोबाट प्रवेश गर्न बाध्य भएका थिए । त्यसै गरी १७ डिसेम्बरका दिन भूतपूर्व गोर्खाहरूसँग गर्ने भनिएको अन्तरक्रियामा पनि विरोध जनाउन जनजातिहरू पुगेका थिए ।

प्ले कार्डमा मधेशमा मारिएका ५५ जनालाई न्याय दे, संविधानको पुनर्लेखन गर, नरसंहार बन्द गर, मधेश र जनजातिको मुद्धा सम्बोधन गरी नाकाहरू खुलाई तत्काल‍ै जनजीवन सामान्य बना, कमल थापालाई युकेमा स्वागत छैन, नाकाजाम अधिकार माग्ने नेपालीहरूले गरेका हौं, भारतले गऱ्यो भनी भारत विराधी सेन्टिमेन्ट नबनाऔं आदि लेखिएका थिए ।

विरोधमा नेपाली सङ्घीय समाजका अध्यक्ष धर्म तामाङ, महासचिव विश्वासहाङ खेवाहाङ, जनजाति महासङ्घका अध्यक्ष, महासचिव, जनमुक्तिका अध्यक्ष महासचिव, लिम्बुवान लिङ्देन पक्षका अध्यक्ष तथा महासचिव लगायत उपस्थित भई प्ले कार्डसहित प्रर्दशन गरेका थिए । तर विरोधकै कारणले अन्तरक्रिया कार्यक्रम रद्ध गरिएको थियो ।

# रिडिङ शाखामा पुनः तिलबहादुर

लण्डन, गत ९ नोभेम्बर २०१५ का दिन नेपाली सङ्घीय समाज युकेको रिडिङ शाखाको प्रथम अधिवेशन सम्पन्न भएको छ ।

अधिवेशनले पुनः तिलबहादुर गुरूङलाई अध्यक्षमा सर्वसम्मत चयन गर्दै ११ सदस्यीय समिति निर्माण गरेको छ । उपाध्यक्ष बलबहादुर राई, सचिव कुवेर हाङा, सदस्यहरू क्रमशः रामप्रसाद गुरूङ, रहरमान राई, भोजबहादुर गुरूङ, गंगाप्रसाद लिम्बु, छत्रबहादुर गुरूङ, विन्द्रामान राई, आसबहादुर गुरूङ चयन हुनुभएको छ । कोषाध्यक्ष र बाँकी सदस्य पछि थप्ने जनाइएको छ । नयाँ समितिलाई निर्वाचन आयुक्त बालकृष्ण राईले सपथ गराउनु भएको थियो । यसबेला भारतले नाकाबन्दी गऱ्यो भन्नेले मधेश, थरूहट लगायत जनजाति आदोलनलाई सम्बोधन गर्न नेपाल सरकारलाई पनि दबाब दिनुपर्ने अन्यथा एमाले, काँग्रेस र एमाओवादीको षड्यन्त्रकारी मुद्धामात्र बोकेको ठहर्ने प्रमुख अतिथि तथा पार्टी वैकल्पिक केन्द्रीय सदस्य भगवान चाम्लिङले बताउनु भयो । कोषाध्यक्ष रामप्रसाद गुरूङले आर्थिक प्रतिवेदन प्रस्तुत गर्नुभएको थियो ।



कार्यक्रममा सङ्घीय समाज युके समितिका अध्यक्ष धर्मबहादुर तामाङ, जंग सुनुवार, बालकृष्ण राई, कमलप्रसाद राई, दावा स्याङबो, दशरथ राई लगायतले मन्तव्य राख्नु भएको थियो ।

# प्रधानमन्त्रीलाई सङ्घीयको ज्ञापनपत्र

*सम्माननीय के. पी. शर्मा ओली ज्यू,*
*प्रधानमन्त्री, नेपाल*
*मार्फत: नेपाली राजदूतावास, लण्डन*

**विषय : मधेसी, थारु, लिम्बुवान तथा आदिवाससँग तुरुन्त वार्ता गरी नाकाजाम खुलाई जनतालाई राहत दिने कार्यहोस् ।**

महाशय,

सबैलाई समान अधिकार नभएको, शाषक पक्षको पक्षपोषण गर्ने र गैर शाषक जातिहरू प्रतिसेकेन्ड अतिक्रमणमा परी कालन्तरमा लोप हुने/हुनुपर्ने व्यवस्था भएको बेइमान नेपालको संविधान जबरजस्त जारी गरेलगत्तै त्यसको विरोधमा जनता उठ्दै गर्दा तमाम आन्दोलनकारी जनताका चासो र मुद्दालाई मेटाउनका निमित्त, संविधानको मुद्दालाई ओझेल पार्दै भारतीय सिमानाका समस्याहरू मिडियामा सुनियोजित रूपबाट ल्याउने र मधेशी, थारू, लिम्बुवान, किरात, मगरात, तमुवान, खसान, नेवाः लगायत आदिवासी जनजातिका आन्दोलनलाई ज्यादतीपूर्ण ढङ्गले दबाउने नेपाल सरकारको दुष्प्रयासप्रति खेद व्यक्त गर्दछौं ।

सभा, सम्मेलन र जुलुस हप्तौंसम्म हुँदा समेत जनताको जायज मागलाई दबाउन खोजिएकोले आन्दोलनको प्रकृतिलाई परिवर्तन गरी मुख्य नाकाहरू बन्द गर्न आन्दोलनकारीहरू विवश भएका हुन् । आन्दोलनकारीको मागलाई सङ्युक्त राष्ट्रसङ्घ, भारत, युरोपियन युनियन लगायतका लगभग सम्पूर्ण मुलुकले समर्थन गरेको कुरा सबैलाई विदितै छ ।

वर्तमान सरकारले सार्वभौम जनताको आवाजलाई जबरजस्त दबाउने, सुनुवाई नगर्ने । शान्तिको सट्टा युद्धको सुरूवात गर्ने । करोडौं जनता आज नाकाजामको



*नेपाली राजदूतावास लण्डनमा ज्ञापनपत्र प्रस्तुत गर्दै महासचिव विश्वासहाङ*

कारण प्रताडित हुँदा रमाउने । हजारौं उद्योगधन्दा बन्द, नाकाहरू बन्दको कारण अर्बौअर्ब घाटा भई मुलुक चरम गरिब बनिरहँदा बेवास्ता गर्ने । षड्यन्त्रकारी राष्ट्रवादको वकालत गर्दै जनतामा भ्रम छर्ने कार्य अक्षम्य छ । नाकाजाम रहर होइन बाध्यता हो । नाकाजामको कारण पीडित सबैमा हाम्रो उच्च सम्मान र सद्भाव छ तर इतिहासमै सबैभन्दा नालायक सरकारले आन्दोलनको ७२ औं दिनमा समेत संवादको टेवलबाट समाधानको पहल नहुँदा दु:ख लागेको छ ।

यहा शाषकसरह सर्वसाधारण जनताको पहुँच छैन । त्यसैले गरिब जनताहरू अब भोक, रोग र शोकले मर्न लाग्दा जनता र देशप्रति जिम्मेवारी बोध होस् भन्ने कामना गर्दछौं र तत्कालै आन्दोलनकारीका जायज मागहरूलाई सम्बोधन गरी, नाकाजाम खुलाई जनतालाई राहत दिने पहलकदमी होस् भन्ने सम्माननीय प्रधानमन्त्रीज्यूलाई हार्दिक अनुरोध गर्दछौं ।

धन्यवाद ।

**विश्वासहाङ खेवाहाङ**
महासचिव

*८ नोभेम्बर २०१५*

**धर्मबहादुर तामाङ**
अध्यक्ष

# नोभेम्बरमा वार्षिक भेला आयोजना गरिने

लण्डन, २ नोभेम्बर २०१५ । नेपाली सङ्घीय समाज युकेको वार्षिक भेला आउँदो २१ नोभेम्बर २०१५ का दिन अल्डरसटको भेटघाट रेष्टुरेष्ट हलमा हुने भएको छ ।



वार्षिक भेला दिउँसो ११ बजे देखि सुरू हुने भएकोले सबैलाई समयमै उपस्थित हुन अध्यक्ष धर्म तामाङले आग्रह गर्नु भएको छ । यस समाजको युकेमा ६ वटा शाखाहरू विस्तार भएका छन् । भेलाका लागि सम्पूर्ण जातीय उत्थान संस्था र बुद्धिजीवीहरूलाई पनि निमन्त्रणा गरिने कुरा वरिष्ठ उपाध्यक्ष जंग सुनुवारले जनाउनु भएको छ । भेलामा सङ्घीय समाजवादी पार्टी, नेपाल र खस समावेशी पार्टीबीच पनि समायोजन गरिने जनाइएको छ । समाजको रिडिङ शाखाको प्रथम महाधिवेशन पनि यही आउँदो ९ नोभेम्बर २०१५ का दिन मुन्चेश रेष्टुरेष्टमा दिउँसो ११ बजे हुने कुरा उपाध्यक्ष बालकृष्ण राईले बताउनु भएको छ । नेपाली सङ्घीय समाज युके सङ्घीय समाजवादी फोरम, नेपालको प्रवास अङ्ग हो ।

# आफ्नै न्यूज पोर्टल 'नयाँसमाचार डटकम' सुरु

लण्डन, २ नोभेम्बर २०१५ । नेपाली सङ्घीय समाजका प्रवास समिति युके, बेल्जियम, हङकङ, कोरिया लगायतको लगानीमा अनलाइन समाचारको वेभसाइट नयाँसमाचार डटकम सुरू गरेको छ ।

पत्रकार देवेन्द्र खापुङ लगायतको मुलुकमा स्थापना भएका नेपाली सङ्घीय समाजलाई ससानो सहयोग निरन्तर गर्न पनि आग्रह गर्नुभएको छ । मिडियाको कोष सञ्चालनका निमित्त आधिकारिक व्यक्तिहरूको सङ्युक्त हस्ताक्षरमा बैंक एकाउन्ट समेत खोली सकिएकाले इच्छुक




सम्पादन र केन्द्रीय प्रचारप्रसार विभागका पदाधिकारी अजम्बर काङमाङ राई, महेश चौरासिया र विश्वासदीप तिगेलाको संयोजन तथा सक्रियतामा उक्त समाचार विशेष वेभसाइट सुरू गरिएको हो ।

मिडियामा पर्याप्त पहुँच नभएकै कारण हाम्रा मुद्धाहरू ओझेलमा परेकोले सबै प्रकारको मिडियाहरूमा लगानी बढाउनु बाध्यता भएको केन्द्रीय विभाग पदाधिकारी काङमाङ राईले बताउनु भयो र सम्पूर्ण जो कसै वा समितिले सजिलै सहयोग गर्न सकिने बताइएको छ ।

सङ्घीय समाजवादी फोरम, नेपालको आधिकारिक पार्टी अवधारणा तथा सूचना राखिने वेभसाइट फेडरलसोसियलिष्ट डट ओआरजी, पार्टीको मुखपत्र लोकसत्ता मासिक, सैद्धान्तिक मुखपत्र सङ्घीय समाजवाद, सङ्घीय समाचार साप्ताहिक आदि प्रकाशनहरू नियमित हुँदै आएका छन् ।

# टाफल्गार स्क्वायरमा संविधान जलाइयो

लण्डन, गत २० सेप्टेम्बर २०१५ का दिन बेलायतको राजधानी लण्डन शहरको केन्द्रबिन्दु टाफल्गार स्क्वायरमा नेपालको संविधान २०७२ जारी अगावै जलाएका छन् ।

नेपालको संविधान २०७२ मा ब्राहमण समुदायको मात्र हालिमुहाली रहने हक, अधिकारको व्यवस्था भएको र ७ प्रदेशको सिमाङ्कनमा पनि एक समुदायको मात्र वर्चश्व रहने गरी अन्य समुदायलाई विभाजित गर्ने षड्यन्त्रमूलक भएकोले मधेसी, आदिवासी जनजाति, मुस्लिम, खस क्षेत्री लगायत पिछडा वर्गलाई स्वीकार्य नहुने सहभागी वक्ताहरूले व्यक्त गरे ।

पूर्व घोषित समयअनुसार नेपालमा संविधान जारी हुँदै गर्दा यहाँ जलाउने कार्यक्रम तय भएअनुसार जलाउने र च्यात्ने कार्य सम्पन्न भयो तर नेपालमा ४५ मिनेट ढिला हुन जाँदा जारी अगावै लण्डनमा जलाउने काम सम्पन्न भएको हो । पहिचानसहितको सङ्घीयवादीहरूको सङ्युक्त पहलमा अपर्भ्कट आयोजना गरिएको विरोध सभामा लगभग सयौंको सङ्ख्या सहभागिता रहेको थियो । सहभागीहरूले समान अधिकार नभएको, समावेशी चरित्रको



संविधान नभएकोले स्वीकार गर्न नसकिने र मधेसमा जारी नरसंहार तुरून्त रोक भन्ने अङ्ग्रेजीमा लेखिएका प्ले कार्डहरू बोकेर जनप्रदर्शन गरेका थिए ।

कार्यक्रममा सहभागिहरूले साँझ लाइट आउट गर्ने र नेपाली दूतावासमा दीपावली गर्न नदिन दर्जनौं सहभागिहरू सिधै दूतावास जानुपर्ने अडान लिएका थिए ।

विरोध सभालाई सङ्घीय समाजवादी फोरम, नेपालका केन्द्रीय सदस्य भगवान चाम्लिङ, सङ्घीय गणातान्त्रिक जनमुक्ति पार्टी युकेका अध्यक्ष नेता थर्क रानामगर, नेपाल आदिवासी जनजाति महासङ्घ युकेका वरिष्ठ उपाध्यक्ष जंग सुनुवार, एसोसियसन अफ नेपलिज मधेसी इन युकेका उपाध्यक्ष ओम नायक, सङ्घीय लिम्बुवान पार्टी, नेपाल युके (लिङदेन पक्ष)का महासचिव राम इजम, महिलाको तर्फबाट श्रीमती हिमाली थापा, नेपाली सङ्घीय समाज युकेका अध्यक्ष धर्मबहादुर तामाङ, जनजाति महासङ्घका महासचिव कर्म शेर्पा, पहिचानवादी मोर्चाका संयोजक पदम गाहा मगर, पूर्व खोटाङ जिल्ला सभापति रत्न राई, जनजाति महासङ्घ नेपालका पूर्व सचिव भक्त दुरा, दिलिप महासेठ, पाण्डव महतो लगायतले यो संविधान मान्य नहुने बताउनु भयो ।

कार्यक्रमलाई विश्वासहाङ खेवाहाङले सञ्चालन गरेका थिए । कार्यक्रममा अब पनि तराईमा राज्यको दमन जारी रहे बेलायतको पार्लियामेन्ट अगाडि शहीदहरूको फोटो टाँगेर प्रदर्शन गर्ने, मानवअधिकारवादी संस्था एमनेष्टीमा अपिल गर्ने सर्वसम्मत निर्णय गरिएको थियो ।

## आन्दोलनमा ऐक्यबद्धता : १ लाख १ हजार सहयोग

*गत १५ अगष्ट २०१५ का दिन सप्तरीको भारदहमा शान्तिपूर्ण विरोधमा उत्रिएका सङ्घीय समाजवादी फोरम नेपालका कार्यकर्ता राजीव राउत र राजीव झालाई गोली हानी हत्या गरेको घटनाप्रति नेपाली सङ्घीय समाज युकेले लण्डनबाट गहिरो खेद व्यक्त गरेको छ ।*

*आन्दोलनमा ऐक्यबद्धता जनाउँदै सङ्घीय समाज युकेले तत्काले १ लाख १ हजार सहयोग गर्ने निर्णय गरेको छ । साथै गृहमन्त्रीको राजीनामाको पनि माग गरेको छ । उक्त रकम मध्ये ५१ हजार रूपैयाँ मृतकद्वय परिवारलाई र बाँकी घाइतेहरूको उपचारका लागि पठाइएको समाजका अध्यक्ष धर्मबहादुर तामाङले जानकारी दिनुभयो । उक्त रकम पूर्व उपमहासचिव तथा सदस्य अजम्बर काङमाङ राईमार्फत् जिम्मा लगाउने प्रयास भइरहेको वरिष्ठ उपाध्यक्ष जंग सुनुवारले बताउनुभयो ।*

# भोजपुरका घाइतेलाई सहयोग

गत चैत्र २४, २०७० को ३ दिने बन्द हड्तालको पहिलो दिन भोजपुरमा भएको प्रहरी दमनको भत्सर्ना गर्दै नेपाली सङ्घीय समाज युकेले आन्दोलनमा घाइते पार्टीका नेता तथा कार्यकर्तालाई रू १ लाख तत्कालै सहयोग गर्ने निर्णय गरयो ।

पार्टीको तर्फबाट आन्दोलनमा घाइते भएकाहरूलाई उपचार गर्ने उद्देश्यले स्थापना भएको १५ लाख कोषबाट पार्टी



केन्द्रीय समिति नेपालको उपस्थितिमा प्रवास अङ्ग प्रमुख आङकाजी शेर्पालाई जानकारी गराउँदै उक्त रकम पठाउने काम भएको वरिष्ठ उपाध्यक्ष जंग सुनुवारले जानकारी गराउनुभयो ।

अग्रमोर्चामा अघि बढिरहेको पार्टीको आन्दोलनमा हरप्रकारको सहयोग गर्न तयार रहेको कुरा युके समिति अध्यक्ष धर्म तामाङले बताउनु भएको छ । पार्टीको नेतृत्व तथा कार्यकर्ताहरूलाई हौसला थप्नका लागि समाजले कोष तयार गरिरहेको छ । भोजपुरको झडपमा गम्भीर घाइते भएकाहरू मध्ये प्रतिमा राई जो पार्टीको स्थानीय कार्यकर्ता साथै सङ्घीय समाजवादी पार्टी नेपाल भोजपुर जिल्ला सदस्य अर्जुन राईको श्रीमतीको उपचारका लागि उक्त रकम पठाइएको हो । अन्य गम्भीर घाइतेहरूलाई पनि सहयोग गर्ने योजना रहेको कुरा समाजका सदस्य रत्न थापा मगरले बताउनु भएको छ ।

घाइते प्रतिमा राईलाई २३ चैत्रको साँझ आयोजित मशाल जुलुसमा प्रहरीले आक्रमण गरी कुटपिटपछि मसाल झोसेका कारण बेहोस भएकोले आज हेलिकप्टरबाट काठमाडौं ल्याई कीर्तिपुरको नेपाल क्लिप्ट एण्ड वर्न सेन्टरको सीसीयुमा भर्ना गरी उपचार सुरू गरिएको छ । जलेको भागको अप्रेशन गर्न अझै केही दिन पर्खेर मात्र हुने डा. शंकर राईले बताउनुभएको कुरा पार्टी उपमहासचिव अजम्बर राईले जानकारी दिनुभएको छ । घाइते राईका साथमा अन्य तीन जना सख्त घाइतेलाई पनि हेलिकप्टरमा काठमाडा ल्याइएको थियो । सङ्घीय समाज युकेले पार्टी पदाधिकारी तथा शुभेच्छुकबाट न्यूनतम १०० पाउण्ड विगत महिनादेखि युकेव्यापी सङ्कलन गर्दै आएको छ ।



# च्यारिटीसहित वार्षिक भेटघाट

गत ५ जुलाई २०१५ । सङ्घीय समाजवादी फोरम नेपालको भातृ सङ्गठन नेपाली सङ्घीय समाज (नेफेसो) युकेको वार्षिक भेटघाट तथा 'भूकम्प पीडित राहत च्यारिटी तथा भेटघाट' डिनर कार्यक्रम सम्पन्न भएको छ ।

हंस्लो लण्डनस्थित काठमाडौं जोन रेष्टुँरामा जुलाई ४ तारिखका दिन सम्पन्न उक्त कार्यक्रमका प्रमुख अतिथि फोरम नेपालका वैकल्पिक केन्द्रीय सदस्य टेकबहादुर थापा (राजेश)ले हालै भएको तीन पार्टीबीचको एकीकरणले उत्पीडित आदिवासी जनजाति, मधेसी, खस, तथा शिल्पी समुदायको अधिकार स्थापित गर्न कोसेढुङ्गा सावित हुने विचार व्यक्त गर्नु भएको थियो ।

संविधानसभामा चार राजनीतिक दलहरूले पेश गरेको मस्यौदा संविधान उही ४७ सालकै संसदीय संविधानको नयाँ संस्करण मात्र भएको हुँदा यसका विरूद्धमा आन्दोलन गर्नुको विकल्प नरहेको धारणा सो अवसरमा थापाले राख्नु भएको थियो । गाईलाई राष्ट्रिय जनावर घोषणा गरेर बनाउन लागिएको कथित संविधानले हिन्दूहरूकै पक्षपोषण गर्ने ठहर समेत थापाले सो अवसरमा गर्नु भएको थियो ।

कार्यक्रमका विशिष्ठ अथिति तथा आदिवासी जनजाति महासङ्घ युकेका अध्यक्ष तुल छन्त्यालले भावी संविधानमा पहिचानसहितको सङ्घीयता कायम नभए त्यस्तो संविधान आफूहरूलाई मान्य नहुने विचार राख्नु भएको थियो भने शेर्पा अर्गनाइजेशन युकेका अध्यक्ष साना शेर्पाले उत्पीडित जातिहरूको हकाधिकारका निम्ति गठन भएका आदिवासीजन्य पार्टीहरू एक भएर अघि बढ्नु पर्ने बेलामा हालै सङ्घीय समाजवादी पार्टी, खस समावेशी राष्ट्रिय पार्टी र मधेसी जनाधिकार

फोरमबीच भएको तीन पार्टी एकीकरणले आदिवासी जनजातिभित्र आशा जगाएको विचार व्यक्त गर्नु भएको थियो ।

कार्यक्रमलाई तिलबहादुर गुरूङ, रिटायर्ड क्याप्टेन टिका राई, आदिवासी जनजाति विद्यार्थी नेता हेम गुरूङ लगायतका नेताहरूले सम्बोधन गर्नु भएको थियो । उक्त कार्यक्रममा १६ बुँदे सहमतिपछि आएको संविधानको मस्यौदालाई वैकल्पिक केन्द्रीय सदस्य राजेश थापा, अध्यक्ष तामाङ र जनजाति अध्यक्ष तुल छन्त्याल लगायतले सामूहिक रूपबाट जलाउने र च्यात्ने काम गर्नुँहुँदै सबैलाई अटाउने संविधानको माग गर्नुभयो ।

सो अवसरमा बेलायती नेपाली समाजमा सञ्चारमाध्यममार्फत खेलेको उल्लेखनीय भूमिकाका निम्ति गोर्खा च्यानल टीभी युकेका लागि निर्देशक विमला सेने, नयाँ सन्देश साप्ताहिक पत्रिका, ग्रीनविच टाइम्स मासिक पत्रिकाका लागि सम्पादक देवेन्द्र खेरेस लगायतलाई प्रशंसा-पत्रद्वारा सम्मानित गरिएको थियो भने नेफेसो युकेमा प्रवेश गर्नुहुने मिनु गुरूङ, निर्देशक प्रेम लामा र राधा राईलाई समाजका अध्यक्ष धर्म तामाङले खदा र समाजको झण्डा प्रदान गर्नु भएको थियो ।

नेफेसो युकेका अध्यक्ष धर्म तामाङको अध्यक्षतामा सम्पन्न उक्त कार्यक्रममा नेफेसो युकेका उपाध्यक्ष जंग सुनुवारले स्वागत मन्तव्य राख्नु भएको थियो भने कार्यक्रमको सञ्चालन समाजका महासचिव विश्वासहाङ खेवाहाङले गर्नु भएको कार्यक्रममा नरेश काङमाङ, भावना परिस्कृत, विश्वासदीप तिगेला लगायतका कवि तथा कवयित्रीहरूले समसामयिक कविता वाचन गर्नु भएको थियो भने गायक किसन राई, भान्जीद्वय मलियना तिगेला र इसिका थोप्रा लिम्बुले नृत्य प्रस्तुत गर्नुभएको थियो ।

भूकम्प पीडित राहत च्यारिटी तथा भेटघाट डिनर कार्यक्रमको संयोजन सचिव मिलन राईले गर्नुभएको थियो ।

# तीन पार्टी एकीकरण : सङ्घीय समाजवादी फोरम, नेपाल नामाकरण



गत १५ जुन २०१५ का दिन काठमाडौमा सङ्घीय समाजवादी पार्टी, नेपाल, मधेशी जनअधिकार फोरम र खस समावेशि पार्टी नेपाल बीच एकिकरण भई सङ्घीय समाजवादी फोरम, नेपाल घोषणा भएको छ ।

नेपालको ५ औं ठूला पार्टीको रूपमा उदाएको यस समाजवादी फोरम भित्र मधेशी, पहाडिया, खस समुदायको एक्ताले नयाँ शन्देश मात्र होइन राजनैतिक तरङ नै ल्याई दिएको छ । मधेश आन्दोलनबाट स्थापित सङ्घीयताको शुत्रधार उपेन्द्र यादवले अध्यक्षताको जिम्मेवार लिनुभएको छ भने नेपाली राजनीतिमा इमान्दार र त्यागि नेताको रूपमा परिचित असोक कुमार राई वरिष्ठ नेताको रूपमा रहनु भएको छ ।

राजनीतिको बौद्धिक भण्डारको रूपमा चिरपरिचित राजेन्द्र प्रसाद श्रेष्ठ सहअध्यक्षको रूपमा चयन हुनुभएको छ । त्यस्तैगरि पूर्व मन्त्री रकम चेम्जोङ लगायतका लोकप्रिय नेताहरू सलग्न १५ पदाधिकारीहरूको चयन भएका छन् ।

# भूकम्पपीडितलाई ३ लाख पठाइयो
## *लिम्बुवान र किरात प्रदेश समिति बन्ने*

गत १७ मे २०१५ का दिन नेपाली सङ्घीय समाज युकेको नर्थहल लण्डनमा सम्पन्न चौथो विस्तारित बैठकले भूकम्प पीडित राहत कोषको लागि ३ लाख तत्कालै नेपाल पठाएको छ ।



निर्णय गरेको छ । समाजले भूकम्प राहतकोषका लागि आगामी ४ जुलाईका दिन लण्डनमा भव्य च्यारिटी डिनर तथा मनोर ञ्जनमूलक कार्यक्रम गर्ने भएको छ । बैठकले तत्कालका लागि उद्धार तथा राहत जुटदै

***बैठकले तत्कालै युकेव्यापी लिम्बुवान प्रदेश समिति, ताम्सालिङ प्रदेश समिति र किरात प्रदेश समिति निर्माण गर्ने पनि निर्णय गरेको छ ।***

समाजको बैठकले भूकम्पमा परी मृत्यु हुनुभएका तथा जनधनको क्षतिप्रति शोक प्रस्ताव पारित गर्दै अग्रगामी विद्यार्थी र युवाहरूको उद्धार कार्यको प्रशंसा गर्दै पार्टी केन्द्रीय समितिको निर्देशनबमोजिम उक्त रकम पठाइएको कुरा अध्यक्ष धर्म तामाङले बताउनु भयो ।

बैठकले तत्कालै युकेव्यापी लिम्बुवान प्रदेश समिति, ताम्सालिङ प्रदेश समिति र किरात प्रदेश समिति निर्माण गर्ने पनि गर्दा सङ्घीयताको मुद्धालाई झनै उत्कर्षमा पुऱ्याउने समेत निर्णय गरेको छ ।

एमाले परित्याग गरी सङ्घीय समाजवादी पार्टी नेपालमा प्रवेश गर्नुभएका भोजपुर निवासी गञ्जमान राईलाई नेपाल केन्द्रीय सदस्य भगवान चाम्लिङले पार्टीको सदस्यता प्रदान गर्नुभएको थियो । बैठकले समाजको अनलाइन मुखपत्र र *नेप्लिजसोसाइटी डट ओआरजी डट युके* पनि सुरू गर्ने भएको छ ।

# जनजाति महासङ्घको नेतृत्वमा पहिचानवादी सङ्घीय गठबन्धनबाट लण्डनमा ज्ञापनपत्र

गत ३ फेब्रुवरी २०१५ का दिन नेपाली राजदूतावास लण्डनमा युकेका पहिचानवादी सङ्घीय गठबन्धनले सहमतिमा संविधान निर्माण गर्नुपर्ने माग गर्दै ज्ञापनपत्र बुझाएका छन् ।

देशका कार्यकारी प्रमुख सुशील कोइरालालाई सम्बोधन गरिएको ज्ञापनपत्रमा वैज्ञानिक आधारमा प्रस्ताव गरिएको १४ वा ११ प्रदेशको माग गरिएको छ । यस्तो सङ्गीन घडीमा प्रधानमन्त्री कोइरालालाई एमाले अध्यक्ष ओलीले फसाउन लागेको कुरा इङ्गित गरेको छ । असहमतिका कारण देशमा गृहयुद्ध सुरू भएको खण्डमा कार्यकारी प्रमुख र सम्बन्धित नेताहरूलाई अन्तर्राष्ट्रिय अदालत हेगको चिसो सिँढीमा पुऱ्याउन युकेले पहल गर्ने समेत चेतावनी गराएको छ ।

ज्ञापनपत्र कार्यवाहक राजदूत तेजबहादुर क्षेत्रीलाई हस्तान्तरण गर्दै नेपाल आदिवासी जनजाति महासङ्घका अध्यक्ष श्रीप्रसाद लिम्बुले सम्बन्धित निकायमा पुऱ्याई दिन आग्रह गर्नुभएको थियो । उक्त ज्ञापनपत्रलाई कर्ण पहारीले पढेर सुनाउनु भएको थियो भने धर्मबहादुर तामाङ, नवराज काम्वाङ, थर्क रानामगर लगायतले छोटो मन्तव्य राख्नु भएको थियो ।

ज्ञापनपत्र हस्तान्तरणका लागि सङ्घीय समाजवादी पार्टी, नेपाल, राष्ट्रिय राष्ट्रिय जनमुक्ति पार्टी, खस समावेशी पार्टी, सङ्घीय लिम्बुवान पार्टी, नेपाल कम्युनिष्ट पार्टी माओवादी, नेपाल आदिवासी जनजाति महिला महासङ्घ लगायतका नेता तथा प्रतिनिधिहरूको बाक्लो उपस्थिति थियो ।

स्मरण रहोस् जनजाति महासङ्घले केही महिनाअघि अल्डरसटको एक समारोहमा पहिचानसहितको सङ्घीय गठबन्धन मोर्चाको निर्माण गरेको थियो । आदिवासी जनजाति राष्ट्रिय आन्दोलनका लागि १८ लाख सहयोग उठाउने अभियानअन्तर्गत ७ लाख उठिसकेको कुरा अध्यक्ष लिम्बुले बताउनुभएको छ ।

# पठाइयो प्रधानमन्त्रीलाई ज्ञापनपत्र

**सम्माननीय प्रधानमन्त्री श्री सुशील कोइरालाज्यू**
**प्रधानमन्त्रीको कार्यालय, सिंहदरबार**
**काठमाडौं, नेपाल**

*मिति: ३ फेब्रुवरी २०१५*

मार्फत, कार्यवाहक राजदूत,
नेपाली दूतावास, लण्डन, युके

## विषय: ज्ञापन पत्र

महोदय,

उपरोक्त सम्बन्धमा आफ्ना लागि आफैँले संविधान लेख्ने एक युगमा एकपटक प्राप्त यो अवसरमा नेपाली जनताले सहमतिमै संविधान लेख्न मिश्रित जनादेश प्रदान गरेको परिस्थितिमा देशको अवस्था अत्यन्तै प्रतिकूलउन्मुख हुनु गम्भीर चिन्ताको विषय बनेको छ ।

देशको भयावहउन्मुख स्थितिलाई कार्यकारी प्रमुखको हैसियतले, सबै जाति, धर्म, सम्प्रदायको अभिभावक रहनु भएको हैसियतले, गरिबीको कारण आत्माहत्या गर्ने वर्ग र नवधनाढ्य वर्गका समेत जिम्मेवार अभिभावक हुनुभएकोले सम्माननीय प्रधानमन्त्रीज्यूले देश र जनताको भलो चिताई स्थायी शान्ति र वास्तविक समृद्धिका लागि सहमतिको सविधान निर्माणमा निर्णायक भूमिका खेल्नुहुन हार्दिक आग्रह गर्दछौं । एकाध दक्षिणपन्थी पार्टीको नकरात्मक रवैयाले सिङ्गो मुलुक तहसनहस हुन लागेकोले यसबेला कार्यकारी प्रमुखबाट आवश्यक भूमिकाको जरूरी हुनपर्दछ अन्यथा भोलि गृहयुद्ध भड्किएको खण्डमा दक्षिणपन्थी नेतृत्व नभई कार्यकारी प्रमुख नै युद्धअपराधीका रूपमा अन्तर्राष्ट्रिय अदालतमा सड्नुपर्ने अवस्थालाई नबिर्सन यो आग्रह गर्दछौं ।



गत ११ माघ २०७१ का दिन बसेको संविधानसभा बैठकमा परिवर्तनकामी प्रतिपक्षीहरूको व्यापक असहमति जारी रहेकै बेला जबरजस्त सम्माननीय सभामुख सुवास नेम्बाङले संविधानसभाको नियमावलीविपरित बहुमतीय प्रकृयाका लागि 'प्रस्ताव निर्माण विशेष समिति' घोषणा गरेर सहमतिको राजनैतिक वातावरण बिग्रेको साथै प्रतिपक्षीहरूलाई बेवास्ता गरी संविधानसभाको प्रकृया अघि बढाई विगतका बृहत शान्ति सम्झौता लगायत आदिवासी जनजाति, मधेसीहरूसँगको विभिन्न चरणको सम्झौताहरूलाई लत्याइएको र अन्तरिम संविधानको मर्म विपरित अवैधानिक प्रकृयालाई निरन्तरता दिएकोमा हामी स्तब्ध छौं । विभिन्न चुनौतीका बाबजुद पनि तत्कालै सहमतिको वातावरण बनाइयोस् र सहमतिमा मात्र संविधान जारी गरियोस् ।

**नयाँ संविधानमा निम्न कुराहरू अनिवार्य व्यवस्था होस् :**

१. पहिलो संविधानसभाको 'राज्य पुनः संरचना तथा राज्य शक्तिको बाँडफाँड समिति'ले वैज्ञानिक अध्ययन गरी सिफारिस गरेको १४ प्रदेश व्यवस्था गरियोस् । विकल्पमा 'राज्य पुर्नसंरचना आयोग'ले प्रस्ताव गरेको ११ प्रदेश व्यवस्था गरियो ।
२. पूर्ण समानुपातिक निर्वाचन प्रणाली र विकल्पमा मिश्रित (५०% प्रत्येक्ष र ५०% प्राप्त कुल मतको अनुपात)
३. विदेशमा रहेका नेपालीहरूले विदेशबाटै भोट गर्न पाउने व्यवस्था होस् ।
४. आमाको नामबाट नागरिकता प्राप्त हुने अविलम्ब व्यवस्था गरियोस् र

प्रवासमा रहेका नेपालीहरूलाई वंशजको आधारमा राजनैतिक अधिकार सहितको दोहोरो नेपाली नागरिकता प्रदान गर्ने व्यवस्था गरियोस् ।

५. धर्मको राज्य नहुने भएकोले हिन्दू राज्य, बुद्धजन्मेको देश भएकोले बुद्ध राज्य घोषणा गर्न मिल्दैन त्यसैले धर्मनिरपेक्षतालाई सैद्धान्तिक मात्र होइन व्यवहारिक रूपबाट पनि संस्थागत गरियोस् ।

अतः सम्माननीय प्रधानमन्त्रीज्यू, जनतालाई अपनत्व अनुभूति हुने सहमतिको संविधान निर्माण गर्न साथै मुलुकको शान्ति र समृद्धिका लागि बिग्रँदो यो परिवेशमा यहाँबाट उचित समयमा सही भूमिका हुनेमा हामी आशावादी छौं । अन्यथा सदिऔंदेखि उत्पीडित समुदायको हकअधिकार सुनिश्चित नभएको खण्डमा देश गृहयुद्धमा होमिन बाध्य भएको खण्डमा यसको सम्पूर्ण जिम्मेवार कार्यकारी प्रमुख नै हुनुपर्ने स्मरण गराउँदछौं ।

*सिरीप्रसाद लिम्बु*
*अध्यक्ष, नेपाल आदिवासी जनजाति महासङ्घ, युके*

**पहिचानसहितको सङ्घीयवादीहरूको संयुक्त गठबन्धनहरू :**

- धर्मबहादुर तामाङ, अध्यक्ष : सङ्घीय नेपाली समाज
- थर्क राना मगर, अध्यक्ष : द हिमालयन अर्गनाइजेशन
- नवराज काम्बाङ, उपाध्यक्ष : सङ्घीय लिम्बुवान समाज
- पूर्ण लक्सम, अध्यक्ष : नेपाली समाज
- टेकबहादुर थापा खस (राजेश), अध्यक्षः खस समाज युके

**बोधार्थः**

१. सम्माननीय राष्ट्रपति डा. रामवरण यादव, राष्ट्रपतिको कार्यालय, शीतल निवास, काठमाडौं

२. सम्माननीय संविधानसभा अध्यक्ष सुवास नेम्वाङ, संविधान सभा, नयाँ बानेश्वर, काठमाडौं

३. माननीय संवैधानिक राजनीतिक संवाद तथा सहमति समिति अध्यक्ष श्री डा. बाबुराम भट्टराई

# बीबीसी नेपाली सेवा निष्पक्ष नभएको ठहर

लण्डन, गत १८ जनवरी २०१५ का दिन नेपाली सङ्घीय समाज युके केन्द्रीय समितिको बैठक विविध विषयमा निर्णय गर्दै सम्पन्न भएको छ । नेपालको असहज परिस्थितिका कारण तोकिएको मितिभन्दा अगावै बैठक बसेको हो ।

निर्माणाधीन नेपालको संविधानमा न्यूनतम मानव अधिकारको समेत व्यवस्था नहुन सक्ने, स्थायी शान्तिको सट्टा युद्धको सुरूवात गर्न लागेको, देशविदेशको लोकप्रिय तथा सर्वस्वीकार्य प्रचलनको आधारमा राज्यको पुनर्संरचना नगरी एक जातिको मात्र हालीमुहाली रहने संरचना निर्माण गर्न लागेको कारण नेपालमा अशान्ति सुरू हुने सङ्केत देखिएको, उक्त अशान्तिले छिमेकी मुलुक चीन र भारतलाई पनि असर गर्ने भएकोले सो कुरा जनाई लण्डनमा रहेका चीन, भारत, अमेरिका, संयुक्त राष्ट्रसङ्घको दूतावास र युके सरकारलाई स्मरणपत्र दिने साथै लण्डनको ट्राफल्गार स्क्वायर वा पार्लियामेन्टअगाडि ब्यानरसहित प्रदर्शन गर्ने बारे व्यापक छलफल भयो ।




नेपालको बिग्रँदो अवस्थालाई नियाल्दै उक्त तयारी गरिएको हो । मित्र शक्तिहरूसँगको सहकार्यमा उक्त कार्यलाई अघि बढाइने भएको छ ।

नेपालको यो सङ्गीन घडीमा बीबीसी नेपाली सेवाले सङ्घीयताका विरूद्ध श्रृङ्खलाबद्ध रूपमा दिँदै आएको समाचारको सवालमा लिखित रूपमा खेद प्रस्ताव पारित गर्दै नेपाली सेवालाई जानकारी गराउँदै बीबीसी विश्व सेवालाई विरोधपत्र बुझाउने निर्णय गऱ्यो । त्यसका लागि सचिव मिलनचन्द्र राईलाई जिम्मेवारी तोकिनुका साथै समाजले पहिचानसहितको सङ्घीयताका लागि नेपाली राजदूतावासमार्फत राष्ट्रपति र सभामुखलाई बुझाउने ज्ञापनपत्रको तयारी व्यहोरा उपमहासचिव कमल राईले जानकारी गराउनु भयो ।

समाजले नेपालमा चलिरहेको आन्दोलनलाई सशक्त सहयोग गर्ने निर्णय गर्नुको साथै युकेमा रहेका आधा दर्जन आफ्ना शाखाहरूको अधिवेशन र नयाँ

ठाउँमा समिति गठनलाई सशक्त बनाउने निर्णय गरयो । रोजमर शाखाको अधिवेशन समन्वयका लागि केन्द्रबाट वरिष्ठ उपाध्यक्ष जंग सुनुवारलाई जिम्मेवारी तोक्यो । उक्त शाखाको अधिवेशन आगामी फेब्रुवरी १८ भित्र हुने भएको छ भने आसफोर्ड शाखाको अधिवेशन समन्दयका लागि केन्द्रीय उपाध्यक्ष राजेन्द्र खिम्दिङलाई तोक्यो । आसफोर्ड शाखाका अधिवेशन पनि आगामी फेब्रुवरीभित्र हुने जनाइएको छ । त्यस्तैगरी लेसस्टर नटिङहाम क्षेत्रको शाखा निर्माणका लागि प्रवक्ता काङमाङ नरेशलाई जिम्मेवारी तोक्यो ।

बैठकले पूर्व सचिव किरण टी लिम्बुलाई केन्द्रीय अनुशासन विभाग सदस्यमा सर्वसम्मत मनोनयन गर्नुका साथै रूम्जाटार निवासी हाल बन्टवर्क लण्डनमा रहनु हुने शिवहरी गुरूङ, नेपाल लमजुङका मङ्गलबहादुर गुरूङ र मनशोभा गुरूङको पार्टी प्रवेशलाई स्वागत गर्दै अनुमोदन गरेको छ । तीनैजना एमाले परित्याग गरी सङ्घीय समाजवादी पार्टी नेपालमा प्रवेश गर्नुभएको हो ।

समाजको आर्थिक प्रतिवेदन कोषाध्यक्ष श्रीमती विमला राईले प्रस्तुत गर्नुभएलगत्तै पार्टीका सम्पूर्ण पदाधिकारी तथा सदस्यहरूबाट यही जनवरी २०१५ देखि मासिक लेभी उठाउने निर्णय गऱ्यो । केन्द्र र क्षेत्रीय समितिमा रहनु भएकाले केन्द्रमा मात्र लेभी बुझाउनु पर्ने र अघिल्ला वर्षको लेभी बुझाउन बाँकीले अब यही जनवरीदेखि सुरूवात गर्ने निर्णय भयो । अरू बेलाको भन्दा अहिले असमान्य स्थिति रहेकोले आर्थिक तथा विविध सहयोगलाई बढाउनु परेको कुरा आर्थिक सहयोग विभाग प्रमुख तथा वरिष्ठ उपाध्यक्ष सुनुवारले बताउनु भयो । समाजले भर्खरै पोखरामा सम्पन्न अग्रगामी विद्यार्थी युनियनको प्रथम महाधिवेशनलाई १ लाख ९ हजार सहयोग गरेको थियो । अब अग्रगामी युवा सङ्घलाई पनि सहयोग गर्ने सर्वसम्मत निर्णय भयो । भर्खरै नेपाल पुगेर आउनु भएका उपाध्यक्ष मेजर योगेश राईले केन्द्रको गतिविधिबारे जानकारी गराउनु भएको थियो ।

युकेमा रहेका धेरै नेपालीहरूले समाजवादी पार्टीलाई आत्मसाथ गरि सकेको तथापि उनीहरूसँग प्रभावकारी सम्पर्क हुन नसकेको कारण अब युके राष्ट्रिय समितिको आफ्नै वेभसाइट पनि सञ्चालन गर्ने निर्णय गऱ्यो ।

केन्द्रमा चलिरहेको पार्टी एकीकरणको अभियानलाई सहयोग गर्न युकेमा पनि नजिकका मित्र शक्तिहरूसँग सौहार्दपूर्ण वातावरण बनाउने निर्णय गऱ्यो । बैठकमा बीएफबीएस गोर्खा रेडियोको कार्यक्रमहरूबारे पनि व्यापक बहस भएको थियो । बैठकको सभापतित्व अध्यक्ष धर्म तामाङले गर्नुभएको थियो भने मध्यस्थकर्ताको भूमिका महासचिव विश्वासहाङ खेवाहाङले गर्नुभएको थियो ।



# अग्रगामीको राष्ट्रिय सम्मेलनलाई एक लाख नौ हजार प्रदान

आसफोर्ड, २१ डिसेम्बर २०१४ । अग्रगामी विद्यार्थी युनियनको प्रथम राष्ट्रिय सम्मेलन पोखरामा चलिरहेको बखत नेपाली सङ्घीय समाज युकेले रू एक लाख नौ हजार प्रदान गरेको छ । विद्यार्थी नेता फरिन्द्र थापामगर र नेपाली सङ्घीय समाज युकेका उपाध्यक्ष देव गुरूङबीचको सम्पर्कबाट अघि बढेको शुभकामना भेटी सङ्कलन अभियानलाई वरिष्ठ उपाध्यक्ष जंग सुनुवार लगायत सम्पूर्ण सदस्यहरूको सक्रियतामा आर्थिक सङ्कलन गरिएको थियो ।

आर्थिक सहयोग गर्नुहुने सबैलाई अध्यक्ष धर्मबहादुर तामाङले धन्यवाद ज्ञापन गर्नुभयो । उक्त रकम पार्टी कार्यालय काठमाडौंमा नेपाली सङ्घीय समाज युकेका उपाध्यक्ष तथा सेवारत मेजर योगेश राईले विद्यार्थी युनियनका अध्यक्ष विवेक राईलाई एक समारोहमा हस्तान्तरण गर्नुभएको थियो । सो कुरा पार्टी केन्द्रीय अध्यक्ष अशोक राईले पनि सामाजिक सञ्जालमार्फत उल्लेख गर्नुभएको छ ।

अग्रगामी विद्यार्थी युनियनको प्रथम राष्ट्रिय सम्मेलन पोखरामा गत पुस १, २ र ३ गते चलेको थियो । भव्यताका साथ सम्पन्न सो सम्मेलनले थप ऊर्जा थपेको छ ।

# पार्टीको तेस्रो स्थापना दिवस मनाइयो



लण्डन, गत २३ नोभेम्बर २०१४ का दिन सङ्घीय समाजवादी पार्टी, नेपालको तेस्रो स्थापना दिवस युकेको नेपाली सङ्घीय समाजले लण्डनमा भव्यतापूर्वक मनाएका छन् । दुई चरणमा सञ्चालित उक्त कार्यक्रमको पहिलो सभा लण्डन शाखा समितिको प्रथम महाधिवेशन रहेको थियो । उक्त अधिवेशनको अध्यक्षता शाखा अध्यक्ष रत्न थापामगरले गर्नुभएको थियो । राजेन्द्र राईको स्वागत मन्तव्यबाट सुरू

भएको अधिवेशनलाई पार्टी केन्द्रीय समिति नेपालका सदस्य भगवान चाम्लिङले शुभकामना मन्तव्य दिनु भएको थियो । शाखा समितिको प्रगति प्रतिवेदन सचिव मिलन राईले प्रस्तुत गर्नुभएको थियो । अधिवेशनका लागि निर्वाचन मण्डल नियुक्ति सल्लाहकार कमल गुरूङ र युके समिति सचिव विश्वासहाङ खेवाहाङले चन्द्र गुरूङको नेतृत्वमा १४ सदस्यीय समितिको घोषणा गऱ्यो । उपाध्यक्षद्वयमा पूर्ण कुमार फालेच्छुवा लिम्बु, राजेन्द्र राई, सचिव लोप्साङ लामा, कोषाध्यक्ष टेकबहादुर गुरूङ र सदस्यहरूमा क्रमशः सुवास श्रीश मगर, अम्बरबहादुर थापामगर, नरभक्त राई, शिवकुमार राई, कृष्ण पुन, दशरथ राई, लोक छन्त्याल, सिनु राई र नीलम राई निर्वाचित हुनुभएको छ ।

नवनिर्वाचित समितिलाई केन्द्रीय सदस्य चाम्लिङले सपथ खुवाउनु भएको थियो । सपथलगत्तै नवनिर्वाचित गुरूङले पार्टी हितको काम गरेर देखाउने प्रतिबद्धता व्यक्त गर्नुभयो ।

# रिडिङ शाखाको प्रशिक्षण सम्पन्न

गत ५ अक्टोबर २०१४ का दिन नेपाली सङ्घीय समाज रिडिङ शाखाले कार्यकर्तामाझ प्रशिक्षण कार्यक्रमको आयोजना गरेको छ । उक्त प्रशिक्षण कार्यक्रममा पार्टी केन्द्रीय उपमहासचिव अजम्बर राई काङमाङले प्रशिक्षण दिनु भएको थियो ।

# एमाले–एमाओवादी परित्याग गरी सङ्घीय समाजवादीमा प्रवेश

विगत ३० वर्षदेखि युकेमा रहँदै आउनु भएका चर्चित स्टेट व्यवसायी कुबेर होडा एमाले परित्याग गरी सङ्घीय समाजवादी पार्टीमा प्रवेश गर्नुभयो । सबैलाई समानता होस् भन्ने मुद्दा बोक्ने पाटी भएकोले आफूले समाजवादीमा प्रवेश गरेको र एक जातीय सोच राख्ने एमाले परित्याग गरेको बताउनु भयो । यस पार्टी आफूले स्थापनाकालदेखि नै मन पराएको तर सम्पर्क नहुँदा सक्रिय हुन समस्या रहेको बताउनु भयो । त्यसैगरी, एमाओवादी समर्थित लोप्साङले पहिचानसहितको सङ्घीयताका लागि एमाओवादीलाई विश्वास गर्न नसकेको कारण समाजवादीमा प्रवेश गरेको बताउनुभयो । उहाँहरूलाई युके केन्द्रीय समिति अध्यक्ष धर्म तामाङले पार्टी सदस्यता परिचयपत्र, झण्डा र खदा प्रदान गरेर प्रवेश गराउनु भएको थियो । अन्य पार्टी प्रवेश गर्नेहरू बोमप्रसाद राई, टेकबहादुर गुरूङ, अम्बरबहादुर थापा, जनक राई, ज्ञानबहादुर राई रहनु भएको छ ।




# ६०१ सभासद्लाई पुस्तक उपहार

२ अक्टोबर २०१४ । सङ्घीय नेपाली समाज, युकेको आर्थिक (६०० पाउण्ड) सौजन्यमा 'सङ्घीय गणतन्त्र नेपाल : समावेशी लोकतन्त्रको उच्चतम् रूप' नामक महत्वपूर्ण पुस्तक सविधानसभा हलमै ६०१ सभासदलाई गत ३० सेप्टेम्बर २०१४ का दिन वितरण गरिएको कुरा रत्न थापामगरले बताउनु भएको छ । उक्त अभियानको नेतृत्व उपाध्यक्ष देव गुरूङ र रत्न थापामगरले गर्नुभएको थियो ।

# तेस्रो स्थापना दिवसका अवसरमा शुभकामना आदानप्रदान

लण्डन समिति शाखाको अधिवेशनलगत्तै सोही स्थानमा वैकल्पिक शक्तिका रूपमा स्थापित यस पार्टीको विगत वर्तमानको समीक्षा गर्दै युके केन्द्रीय समितिले पार्टीको तेस्रो स्थापना दिवस समारोह सम्पन्न गऱ्यो । वरिष्ठ उपाध्यक्ष जंग सुनुवारको स्वागत मन्तव्यबाट सुरू भएको समारोहलाई अर्का उपाध्यक्ष राजेन्द्र खिम्दिङले पार्टीको समीक्षा गर्दै चाँडै आसफोर्ड शाखा र रोजमर शाखाको अधिवेशन गर्ने योजना अघि सार्नु हुँदै नवनिर्वाचित लण्डन समितिलाई बधाई ज्ञापन गर्नुभएको थियो ।

समारोहमा सङ्घीय समाज युकेका सल्लाहकार तथा पूर्व गाविस अध्यक्ष भक्त गुरूङले सङ्घीय प्रदेशको प्रस्तावित ७ प्रदेशको ढाँचासँगै आदिवासी जनजाति, मधेशी तथा सिमान्तकृतहरूलाई शक्तिहीन नोकर बनाउने षड्यन्त्र भइरहेकोले त्यसकाविरूद्ध आन्दोलन सुरू भई सकेकोले त्यसका लागि युकेबाट पनि केही पहल गर्नुपर्ने विचार राख्नुभयो । उहाँले १४ प्रदेश हुनुपर्ने विचार व्यक्त गर्नुभयो । सल्लाहकारहरू कृष्ण राई, कमल गुरूङ, डा. कविताराम श्रेष्ठ र नेपाल आदिवासी जनजाति महासङ्घ युकेका महासचिव नरेशमणि काङमाङ, रिटायर्ड क्याप्टेन टिका राई, अभिभावकको तर्फबाट वीरबहादुर गुरूङ, पत्रकार देवेन्द्र खेरेस, महिलाको तर्फबाट कोषाध्यक्ष विमला राईले पनि मन्तव्य राख्नु भएको थियो ।

पार्टी केन्द्रीय समिति नेपालका सदस्य भगवान चाम्लिङ प्रमुख अतिथि रहनु भएको उक्त समारोहका सभापतित्व युके केन्द्रीय समिति अध्यक्ष धर्म तामाङले गर्नुभएको थियो । मध्यस्थकर्ताको भूमिका महासचिव विश्वासहाङ खेवाहाङले गर्नुभएको थियो ।

गत २० सेप्टेम्बरमा सम्पन्न नेपाली सङ्घीय समाज युकेको प्रथम महाधिवेशन लगतै दुई वटा पार्टी प्रशिक्षण सम्पन्न, एक नयाँ क्षेत्रीय समिति गठन गर्नुका साथै लण्डन शाखाको अधिवेशन सम्पन्न गरेको छ । यस समाजको बेलायतमा ७ शाखाहरू रहेका छन् ।

# प्रथम बैठक सम्पन्न, विभागहरू गठन

गत १ नोभेम्बर २०१४ का दिन नर्थहोल, लण्डनको चौतारी रेष्टुरेष्टमा नेपाली सङ्घीय समाज युकेको प्रथम बैठक सम्पन्न भयो ।

भर्खरै सम्पन्न ऐतिहासिक प्रथम महाधिवेशनको समीक्षाबाट सुरू भएको बैठकले समितिलाई पूर्णता दिनुका साथै विभिन्न विभाग तथा राज्य समितिहरू गठन गरेको छ । उपाध्यक्ष जंग सुनुवारले महाधिवेशनको समीक्षा गर्नुभए लगत्तै उठेका प्रश्नहरूको उत्तर पूर्व अध्यक्ष भगवान चाम्लिङ र पूर्व महासचिव प्रेमकुमार राईले दिनु भयो । समग्रमा महाधिवेशन भव्यतापूर्वक सम्पन्न भएको, नेपालबाट आमन्त्रित अतिथिज्यूहरूबाट राम्रो प्रभाव भएको कुरा नवनिर्वाचित अध्यक्ष धर्मबहादुर तामाङले उल्लेख गर्नुहुँदै समीक्षाको चरणलाई टुङ्ग्याउनु भएको थियो ।

समीक्षालगत्तै निवर्तमान अध्यक्ष र महासचिवले नवनिर्वाचित अध्यक्ष र महासचिवलाई सम्पूर्ण डकुमेन्टसहित जिम्मेवारी हस्तान्तरण गर्नुभयो । त्यसको लगत्तै अघिल्लो कार्यसमितिलाई हार्दिक आभारसहित अध्यक्ष तामाङ र नवनिर्वाचित महासचिव विश्वासहाङ खेवाहाङले बिदाई गर्नुभयो । पूर्व अध्यक्ष चाम्लिङ र पूर्व महासचिव राईले पनि बिदाईको मन्तव्य राख्नु भएको थियो । बैठकले बुँदागत विभिन्न निर्णयहरू गऱ्यो । जसअनुसार वर्षभरिमा गरिने कार्ययोजनामाथि छलफल गरी पारित गर्नुका साथै केन्द्रीय समितिमा जंगबहादुर सुनुवारलाई वरिष्ठ उपाध्यक्ष, मेजर योगेश राईलाई उपाध्यक्ष, नरेशमणि काङमाङलाई पार्टी प्रवक्ता र ईश्वर चाम्लिङलाई सचिवमा पदोन्नती गऱ्यो । त्यसै गरी, रत्न थापामगर, टिकाधन राई, मान राई र राज राईलाई केन्द्रीय समिति सदस्यमा चयन गऱ्यो । तमु छो ज धीं युकेका केन्द्रीय अध्यक्ष कमल गुरूङलाई पार्टीको झण्डा र खदा दिएर अध्यक्ष तामाङले पार्टीमा औपचारिक स्वागत गर्नुभयो । गुरूङ स्वतः यसपार्टीमा केहीसमय अघिदेखि कार्यरत हुनुहुन्थ्यो । गुरूङलाई पार्टीको महत्वपूर्ण जिम्मेवारी पनि तोकेको छ ।

सङ्घीय समाजवादी पार्टी, नेपालको विभिन्न जातीय मोर्चाहरू युकेमा पनि विस्तार शुभारम्भ गरिएको छ । जस मध्ये ताम्सालिङ प्रदेश समिति युके संयोजकमा दावा स्याङ्बो, सहसंयोजकमा सुशीला वाइबा, किरात खम्बुवान प्रदेश समिति युके संयोजक भानुभक्त राई, तमुवान प्रदेश समिति युके संयोजकमा कमल गुरूङलाई चयन गरिएको छ ।

पार्टीको भातृसङ्गठन सङ्घीय

सांस्कृतिक महासङ्घ युकेको संयोजकमा गायक किसन राई र सहसयोजकमा प्रकाश राई प्राणलाई चयन गरयो । त्यसै गरी पार्टीका विभिन्न विभागहरू पनि निर्माण गरिएको छ । जसअनुसार पार्टी प्रशिक्षण विभाग संयोजक भगवान चाम्लिङ, सहसंयोजक प्रेमकुमार राई । पार्टी आर्थिक विभाग संयोजक जंग सुनुवार र सहसंयोजकमा विमला राई, पार्टी अनुसासन विभाग संयोजक राजेन्द्र खिम्दिङ र सहसंयोजक कमल गुरूङ । सङ्घीय युवा सङ्घ युके संयोजक मिलन राई र सम्पर्क सहयोगी बालकृष्ण राई । पार्टी सङ्गठन विभाग संयोजक विश्वासहाङ खेवाहाङ र कमलप्रसाद राई । पार्टी प्रचारप्रसार विभाग संयोजक देव गुरूङ र सहसंयोजकमा जानुका राई । समाजवादी महिला सङ्घ युकेका संयोजकमा बसुन्धरा याख्खा राई चयन हुनु भएको छ भने अध्यक्ष, महासचिव र उपमहासचिव रहेको सचिवालय गठन गरेको छ । समिति तथा विभागहरूले आगामी ६ महिनाभित्र न्यूनतम आवश्यक कार्य गर्न नसकेको अवस्था सम्पूर्ण अधिकार केन्द्र समितिले लिनसक्ने समेत निर्णय गऱ्यो ।

बैठकले सल्लाहकार समिति र बुद्धिजीवी समिति बेग्लाबेग्लै गठन गरेको छ । जसअनुसार सल्लाहकार समितिमा पूर्व अध्यक्ष तथा केन्द्रीय नेपाल समिति सिफारिस भगवान चाम्लिङ, पूर्व महासचिव प्रेमकुमार राई, सिरी प्रसाद लिम्बु, कमल गुरूङ, भक्तबहादुर गुरूङ, मेजर भूपजित राई, कृष्णबहादुर राई, क्षेत्रकला राई, जीवन राई, खगेन्द्र याख्खा, ताराबहादुर गुरूङ, दिलिप महासेठलाई चयन गरयो भने बुद्धिजीवी समितिमा बीके पाण्डे, एकेन्द्र गुरूङ, केदार सुनुवार, रमेश घिमिरे र शिवधन राईलाई चयन गरेको छ ।

नेपाल केन्द्रीय समितिको सम्पन्न हुन गइरहेको प्रथम महासम्मेलनका लागि युकेमा सदस्यता वितरण लगायतलाई तीव्रता दिने साथै निर्माणाधिन संविधानमा पहिचानसहितको प्रभावकारी राज्य नबनाउने अवस्था आएमा युके समितिले महत्वपूर्ण भूमिका खेल्ने निर्णय गऱ्यो ।

स्मरण रहोस्, सङ्घीय समाजवादी पार्टी, नेपालको प्रवास अङ्गको रूपमा रहेको नेपाली सङ्घीय समाज युकेले नेपालको संविधानसभाका माननीय ६०१ सभासदहरू सबैलाई सङ्घीयता सम्बन्धि दस्तावेज रहेको 'सङ्घीय गणतन्त्र नेपालः समावेशी लोकतन्त्रको उच्चतम रूप' नामक पुस्तक दसैं-तिहारको शुभकामनासहित उपहार हस्तान्तरण गरिएको कुरा उपाध्यक्ष देव गुरूङले बताउनु भयो । गत २० सेप्टेम्बरमा सम्पन्न पार्टीको प्रथम महाधिवेशन पश्चात गठन भएको नेपाली सङ्घीय समाज मेडस्टोन समितिलाई अनुमोदन गर्दै रिडिङमा सम्पन्न पार्टी प्रशिक्षणको लागि योगदान गर्नुहुने सबैलाई धन्यवाद प्रस्ताव पारित गऱ्यो । पार्टीले आउँदो मङ्सिर ७ तदनुसार २३ नोभेम्बरका दिन लण्डनमा पार्टी स्थापना दिवसका साथै लण्डन शाखा समितिको महाधिवेशन गर्ने समेत निर्णय गऱ्यो । यस समाजका विभिन्न ७ शाखा विस्तार भइसकेका छन् ।

# मेडिस्टोनमा गणेशबहादुर गुरुङ संयोजक



१ अक्टोबर २०१४ मा मेडिस्टोन, केन्टमा नेपाली सङ्घीय समाज, क्षेत्रीय समिति मेडिस्टोन गठन भएको छ । सङ्घीय समाजवादी पार्टी, नेपालका उपमहासचिव अजम्बर काङमाङको उपस्थितिमा समिति गठन भएको हो ।

समाजसेवी गणेशबहादुर गुरूङको संयोजकत्वमा १५ सदस्य समितिमा उपसंयोजक रत्नकुमार राई सचिव, देवेन्द्र राई सहसचिव, धीरज राई कोषाध्यक्ष, हर्क चाम्लिङ र सदस्यहरू खड्गबहादुर थापा , मोहनबहादुर सुनुवार, यामबहादुर गुरूङ, धनबहादुर सुनुवार, तुलसीराम थापा, बोमबहादुर लिम्बु, बलबहादुर गुरूङ, हर्कबहादुर लिम्बु, बुद्धिबहादुर राई र चक्र थापा समितिमा रहेका छन् । नवगठीत कार्यसमितिलाई प्रमुख अतिथि उपमहासचिव अजम्बर काङमाङले पद तथा गोपनियताको सपथग्रहण गराउनुका साथै कार्य सफलताको शुभकामना व्यक्त गर्नुभएको थियो ।

मेडिस्टोन नेपाली समाजका उपाध्यक्ष रत्नकुमार राईको संयोजनमा आयोजना गरिएको भेलामा प्रमुख अतिथि उपमहासचिव काङमाङले नेपालको वर्तमान परिस्थितिमा सङ्घीय समाजवादी पार्टी, नेपालको निति तथा कार्यक्रमको बारेमा प्रशिक्षण दिनुभएको थियो । भेलामा उपस्थित व्यक्तिहरूले विभिन्न जिज्ञासाहरू राखेका थिए भने प्रमुख अतिथिले सबै जिज्ञासाहरूका बारेमा पार्टीको प्रष्ट धार णा राख्नुभएको थिया ।

नेपाली सङ्घीय समाज युके सन् २०१३ सालमा स्थापना भई सङ्घीय समाजवादी पार्टी, नेपालको भातृ संस्थाको रूपमा बेलायतमा कृयाशील रहेको छ । समाजको बेलायतका विभिन्न ठाउँहरूमा क्षेत्रीय समितिहरू गठन गरिएका छन् ।

- देवेन्द्र खेरेसबाट

# पहिचानसहितको सङ्घीयताले सबैको भलो गर्छ र मुलुकलाई समृद्ध बनाउँछ : महासचिव श्रेष्ठ



गत २० सेप्टेम्बर २०१४ का दिन लण्डनको नर्थहलमा सङ्घीय नेपाली समाज युकेको प्रथम ऐतिहासिक महाधिवेशन सम्पन्न भएको छ । पहिचान सहितको सङ्घीयताले सबैको भलो र सिङ्गो मुलुकलाई समृद्ध बनाउने कुरा प्रमुख अतिथि पार्टी केन्द्रीय महासचिव राजेन्द्र श्रेष्ठले बताउनु भयो । श्रेष्ठले आफ्नो पार्टीको राजनैतिक सिद्धान्त विश्वमै उत्कृष्ट रहेको र छोटो समयमै पार्टीले धेरै प्रगति गरेको उल्लेख गर्नुभयो ।

त्यसैगरी पार्टी केन्द्रीय उपमहासचिव अजम्बर राई काङमाङले देशलाई शान्ति र सुव्यवस्था कायम गर्न अहिलेको प्रतिगामी सरकारलाई ध्वस्त बनाउन आन्दोलन गर्नुपर्ने र त्यसका लागि पार्टी सङ्गठन देशविदेशमा मजबुत बनाउनु परेको बताउनु भयो ।



पार्टी केन्द्रीय प्रवास विभाग प्रमुख आङकाजी शेर्पाले विगत २००७ देखि एक जातीय हालीमुहाली हुने राज्य बनेको र हामीले चाहिं सबैको सहभागिता हुने राज्य चाहेको बताउनु भयो । उहाँले भन्नुभयो, 'हामीले देश र जनताको हित र प्रगतिको मुद्दा हाँकेको हो । कसैले जातिवादी भन्ने अनेक आरोप लगाए पनि त्यसको कुनै अर्थ छैन । त्यस्ता शकुचित विचार बोकेकालाई दया

गरी सहानुभूति दिने बताउनु भयो ।

लण्डनको नर्थहलमा सम्पन्न महाधिवेशनबाट धर्म तामाङको अध्यक्षतामा २९ सदस्सीय कार्यसमिति चयन भएको छ । महाधिवेशनमा ३ दर्जन नेता कार्यकताहरू काँग्रेस र एमाले परित्याग गरी सङ्घीय समाजवादी पार्टीमा प्रवेश गर्नुभएको थियो । नवप्रवेशीहरूलाई महासचिव श्रेष्ठले खदा लगाइदिएर स्वागत गर्नुभएको थियो । नयाँ कार्यसमिति चयनको लागि पदम राई, देवीबहादुर लिम्बु र प्रेम राई रहेको निर्वाचन मण्डल निर्माण गरिएको थियो । नयाँ निर्वाचित नेतृत्वलाई प्रमुख अतिथि श्रेष्ठले सपथ खुवाउनु भएको थियो । तदर्थ समितिका अध्यक्ष भगवान चाम्लिङको सभापतित्वमा सम्पन्न महाधिवेशनलाई महासचिव प्रेम राईले सञ्चालन गर्नुभएको थियो । नेकपा माओवादी, सङ्घीय लिम्बुवान पार्टी लगायतका आमन्त्रित अतिथिहरूले पनि शुभकामना मन्तव्य दिनुभएको थियो । सहभागीहरूलाई चर्चित गायिका रेष्मा सुनुवारले लोकप्रिय गीतहरू गाएर मनोरन्जन प्रदान गर्नुभएको थियो ।

सङ्घीय समाज युके सन् २०१२ मा स्थापना भई सञ्चालनमा रहेको हो भने सङ्घीय समाजवादी पार्टी नेपालको एक प्रवास अङ्गको रूपमा रहेको छ । यस समाजको युकेमा विभिन्न ६ क्षेत्रीय शाखाहरू रहेका छन् ।

> हामीले देश र जनताको हित र प्रगतिको मुद्धा हाँकेको हो । कसैले जातिवादी अनेकअनेक आरोप लगाएपनि त्यसको कुनै अर्थ नरहेको र त्यस्ता शकुचित विचार बोकेकालाई दया गरि सहानुभूति दिने बताउनु भयो ।

## नेताहरूको सम्मानमा महासङ्घको कार्यक्रम

युके भ्रमणमा आउनुभएका सङ्घीय समाजवादी पार्टी, नेपालका महासचिव तथा पूर्वमन्त्री राजेन्द्र श्रेष्ठ, उपमहासचिव अजम्बर राई काङमाङ, प्रवास विभाग प्रमुख आङकाजी शेर्पा एवम् सामाजिक लोकतान्त्रिक पार्टीका अध्यक्ष मण्डल सदस्य डा. चैतन्य सुब्बाको स्वागतमा एक कार्यक्रमको आयोजना गरिएको छ ।

२१ सेप्टेम्बरका दिन नर्थहलको एक रेष्टुरेष्टमा सम्पन्न कार्यक्रम नेपाल आदिवासी जनजाति महासङ्घ युकेले एक बृहत अन्तरक्रिया कार्यक्रमको आयोजना गरेको थियो ।

# पहिचान पक्षधरहरूको सङ्युक्त गठबन्धनले बुझायो ज्ञापनपत्र

गत ७ अगष्ट २०१४ का दिन युकेमा रहेका पहिचान पक्षधर सङ्घीयवादीहरूको सङ्युक्त गठबन्धनले संविधान सभाका सभाध्यक्षको लागि बेलायतको लागि कार्यवाहक नेपाली राजदुतलाई ज्ञापनपत्र बुझाएको छ ।

गठबन्धनका ५ राजनीतिक पार्टी अन्तर्गत नेकपा-माओवादी, सङ्घीय समाजवादी पार्टी नेपाल, सङ्घीय लोकतान्त्रिक राष्ट्रिय मञ्च, सङ्घीय लिम्बुवान पार्टी नेपाल, राष्ट्रिय जनमुक्ति पार्टी लगायत नेपाल आदिवासी जनजाति महासङ्घ र लिम्बुवान नागरिक समाज युकेका नेतृत्वहरूको हस्ताक्षर रहेको ज्ञापनपत्रमा अघिल्लो संविधानसभाको राज्य पुनर्संरचना तथा राज्य शक्तिको बाँडफाँड समितिले प्रस्ताव गरेको १४ प्रदेश वा राज्य पुन संरचना आयोगले प्रस्ताव गरेको ११ प्रदेश बनाउनु पर्ने सुझाव दिएको छ । राज्य पुनर्संरचना अत्यन्त महत्वपूर्ण विषय भएकोले यदि राज्य पुनर्संरचनामा बेइमानी र षड्यन्त्र भएको खण्डमा सशक्त आन्दोलन गरिने चेतावनी पनि दिइएको छ ।

कार्यवाहक राजदूत तेजबहादुर क्षेत्रीले आफूले जतिसक्दो चाँडो सम्बन्धित निकायमा पठाई दिने प्रतिबद्धता व्यक्त गर्नुभयो । ज्ञापनपत्र हस्तान्तरणसँगै आन्दोलनको लागि तयारी सुरु भएको कुरा सङ्घीय लिम्बुवान पार्टीका उपाध्यक्ष नवराज काम्बाङले बताउनु भयो ।

# अगुवा कार्यकर्ता प्रशिक्षण सम्पन्न

गत २१ सेप्टेम्बरका साँझ लण्डन स्थित चौतारी रेष्टुरेष्टमा पार्टीका अगुवा नेता तथा पार्टी कार्यकर्ताहरूलाई प्रशिक्षण दिइएको थियो । दुई दर्जन नेता कार्यकर्ताको सहभागिता रहेको उक्त प्रशिक्षण कार्यक्रमको अध्यक्षता नवनिर्वाचित उपाध्यक्ष जंग सुनुवारले गर्नुभएको थियो ।

पार्टीको नीति तथा कार्यक्रम, संविधान निर्माण सम्बन्धमा पार्टीका धारण तथा आगामी रणनीतिका बारेमा नेतात्रय श्रेष्ठ, काङमाङ, शेर्पा र नवनिर्वाचित केन्द्रीय सदस्य भगवान चाम्लिङले प्रशिक्षण दिनु भएको थियो ।

**पार्टी क्षेत्रीय समितिहरूको भेला तथा प्रशिक्षण हुँदै**

पार्टी केन्द्रीय नेतृत्वहरूको उपस्थितिमा विभिन्न क्षेत्रीय समितिको भेला, महाधिवेशन तथा प्रशिक्षण कार्यक्रम राखिएको कुरा लण्डन शाखाका अध्यक्ष रत्न थापाले बताउनु भयो ।

# विभिन्न पार्टी छोडी सङ्घीय समाजवादीमा प्रवेश

गत २० अप्रिल २०१४ का दिन अल्डरसट स्थित काँग्रेस, एमाले परित्याग गरि २० कार्यकर्ता सङ्घीय समाजवादी पार्टी, नेपालमा प्रवेश गरेका छन् ।



समाजवादी कास्कीका नेता जंगबहादुर गुरूङ, तमु धिं युकेका अध्यक्ष कमल गुरूङ र जगत गुरूङको उपस्थितिमा उक्त प्रवेश कार्यक्रम सम्पन्न भएको थियो । नव प्रवेशीहरू मध्ये भक्तबहादुर गुरूङ र ताराबहादुर गुरूङलाई बेलायत समितिको सल्लाहकारमा चयन गरियो । पार्टी प्रवेश कार्यक्रमलाई बेलायत केन्द्रीय समितिका अध्यक्ष भगवान चाम्लिङले सम्बोधन गर्दै नवप्रवेशीहरूलाई स्वागत गर्नुभएको थियो ।

# दक्षिण-पूर्वी क्षेत्रीय समिति गठन

लण्डन ४ मई, २०१३ । विगत लामो इतिहासदेखि राज्य शासनद्वारा जाति, भाषा, धर्म, संस्कृति, प्रशासन, सुरक्षा लगायत राज्यको नीति निर्माण तहमा हेपिएका-छलिएका-पेलिएका आदिवासी, जनजाति, मधेसी, दलित, मुस्लिम, पिछडा समूह, अल्पसङ्ख्यक लगायत राज्य, उद्योगी-व्यावसायी, कर्मचारी, मजदुर, किसान, महिलाहरूमाथि गरिएका भेदभावपूर्ण शोषण-उत्पीडिनका बारेमा सम्बोधन गरेर जातीय, वर्गीय, क्षेत्रीय, स्थानीय तथा लैङ्गिक रूपमा समावेशी राज्य व्यवस्था स्थापना गर्नका लागि जन्मिएको सङ्घीय समाजवादी पार्टीका भातृसङ्गठनहरू तीव्ररूपमा अगाडि बढिरहेका छन् ।

यसैक्रममा नेपाली सङ्घीय समाज युकेको जन्म २२ डिसेम्बर २०१२ मा भएपछि लगातार यसका क्षेत्रीय समितिहरू गठन भइरहेको छ । ६ मार्च २०१३ मा स्विन्डन समिति, ६ अप्रिलमा रेडिङ समिति, २१ अप्रिलमा ग्रेटर लण्डन समिति र ४ मइमा आसफोर्ड समिति भव्यताका साथ गठन भइसकेका छन् भने अब निकट भविष्यमै कोल्चेस्टर र स्कटल्यान्डमा गठन गर्ने गृहकार्य भइरहेको बुझिएको छ ।

जीवनप्रकाश राईको अध्यक्षतामा



नेपाली सङ्घीय समाज युकेको 'दक्षिण पूर्वी क्षेत्रीय समिति' गठन भएको हो । ४३ सदस्यीय उक्त समितिमा उपाध्यक्षहरू शान्ता गौचन, रिपुमान राई, भाग्यवती राई र विनोदकुमार राई, सचिवमा गंगाप्रसाद राई, सहसचिवमा ध्यानबहादुर राई, कोषाध्यक्षमा पुर्ण गुरूङ, सहकोषाध्यक्षमा कमल राई र सदस्यहरूमा धनराज राई, अन्जना राई लिम्बु, टीका राना, ठाकुर आले, श्याम राई, कुमार घले, शकुन्तला नेम्बाङ, दुर्गा राई, मीना गुरूङ, विमला राई, भीमकुमारी लिम्बु, अमृतमान राई, निम शेर्पा, भद्रबहादुर राई, मेघराज मगर, प्रश्न राई, लोकबहादुर गुरूङ, गंगाराज राई, राम लिम्बु, याम कुमार याक्खा राई, खगेन्द्र तावा लिम्बु, दिल लिम्बु,

दीप लिम्बु, भविन्द्र राई, रामप्रसाद लिम्बु, बिम्ला लिम्बु, याम पुन छन्त्याल, शशि पुन, निरज दुरा, दीपक काउछा, गणेश पुन, भीम थापा, दिलबहादुर सुनुवार र सूर्यकुमार राई रहेका छन् ।

नेफेसो बेलायतका केन्द्रीय जनसम्पर्क विभाग प्रमुख मदन राईको संयोजकत्वमा भएको यस कार्यक्रममा केन्द्रीय उपाध्यक्ष राजेन्द्र खिमदिङले स्वागत मन्तव्य राख्नु भएको थियो । प्रमुख अतिथि अन्चल राईले भन्नुभयो, 'अहिलेको परिप्रेक्षमा नेपाललाई सुहाउने पार्टी नै सङ्घीय समाजवादी पार्टी हो । एकात्मवादीहरूले हामीलाई विखन्डन गर्न प्रयास गरिरहने छन् तर हामी सधैं एकसूत्रमा बाँधिएर सङ्घीयताको पक्षमा लडिरहने छौं । जसले नेपालमा सङ्घीयताले देश टुक्रिन्छ भनिरहेका छन त्यो गलत प्रचार हो ।' उनले भने, 'हाम्रो लडाइँ भनेको पहिचानको हो । यो लडाइँ जारी रहिरहने छ । त्यसैले जातीय मुक्तिका लागि सङ्घीयता र वर्गीय मुक्तिका लागि समाजवाद भन्ने हाम्रो मुख्य नारालाई साकार पारेरै छाड्ने छौं ।'

*- गोपालकृष्ण राईबाट*

# युकेमा सङ्घीयवादी मोर्चा गठन

गत २९ जुन २०१४ का दिन नेपाल आदिवासी जनजाति महासङ्घ, युकेको सक्रियतामा पहिचानसहितको सङ्घीयताका लागि सङ्घीयवादी मोर्चा गठन भयो । अल्डसटको एक रेष्टुरेष्टमा आयोजित भेलामा नेकपा माओवादी, सङ्घीय समाजवादी पार्टी नेपाल, राष्ट्रिय जनमुक्ति पार्टी, सङ्घीय लिम्बुवान राज्य समिति लगायतका पार्टी नेतृत्वहरूको भेलाले सङ्घीय मोर्चा निर्माणमा सहमत गर्दै आगामी बृहत बैठकका लागि बुद्धिजीवी पदम गाह मगरलाई संयोजक तोक्यो । मोर्चाको नेतृत्व, कार्यक्षेत्र र कार्यनीति आगामी बैठकले निर्धारण गर्नेछ । जनजाति महासङ्घका अध्यक्ष सिरिप्रसाद लिम्बुले महासङ्घले एउटा बहस मञ्च मात्र निर्माण गरिदिएको र नवनिर्मित राजनीतिक मोर्चामा महासङ्घको सलग्नता नरहने स्पष्ट पार्नुभयो । भेलाको सञ्चालन महासचिव नरेश काङमाङले गर्नु भएको थियो । उक्त स्थानमै दोस्रो चरणमा नेपाल आदिवासी जनजाति महासङ्घ युकेको वार्षिक भेला पनि सम्पन्न भएको थियो । भेलामा महासचिव काङमाङद्धारा प्रस्तुत कार्यदिशा छलफल पछि सर्वसम्मत रूपमा पारित भयो ।



# तीव्र रुपमा पार्टीको भातृसङ्‌ठन विस्तार

नोर्थहल्ट, लण्डन । गत शनिबार २३ फेब्रुवरी २०१३ का दिन, लण्डनको नोर्थहल्टस्थित नोर्थहल्ट भिलेज कम्युनिटीहलमा सङ्घीय समाजवाद प्रजातान्त्रिक मञ्च युकेको तेस्रो बैठक सम्पन्न भएको छ ।

२२ डिसेम्बर २०१३ मा स्थापना भएको सङ्घीय समाजवाद प्रजातान्त्रिक मञ्च युके सङ्घीय समाजवादी पार्टी नेपालको अभिन्न भातृसंस्था हो । यस संस्थाको मूल उद्देश्य बेलायतमा छरिएर बसोवास गरिरहेका सम्पूर्ण नेपालीहरूमाभ चेतना फैलाउँदै मातृभूमि नेपालको विकासमा अग्रसर बनाउनु रहेको छ ।

दुई चरणमा सञ्चालन भएको बैठकमा, पहिलो चरणमा संस्थाका महासचिव प्रेम राई र सचिव रामकाजी राईले छलफलका लागि ११ बिभिन्न प्रस्तावहरू प्रस्तुत गर्नभएको थियो । जस्तै सदस्यताका आकार, प्रकार र वितरण, स्थायी समिति सदस्य आङ्काजी शेर्पाको बेलायत आगमन सम्वन्धमा, प्रस्तावित युरोपब्यापी सङ्घीय समाजवादी सङ्गठन गठन सम्वन्धमा र बेलायतका बिभिन्न क्षेत्रहरूमा क्षेत्रीय समितिहरू गठन सम्वन्धमा केन्द्रित थियो ।

५०।६० जनाको उपस्थिति रहेको बैठकको दोश्रो चरणको छलफल लण्डनस्थित क्षेत्रीय समितिको गठन सम्बन्धमा केन्द्रित थियो । केन्द्रीय प्रचार प्रसार प्रमुख गोपाल कृष्ण राईद्वारा सञ्चालित कार्यक्रममा विषयगत बृहत छलफलपछि दिवाकर राईको संयोजकत्वमा सदस्यहरू कृष्णबहादुर राई, राजकुमार राई, जद्धकुमार राई, जगतहाङ लिम्बु, मधु राई, सुमित्रा राई, रोमप्रसाद राई र गोपालकृष्ण राईहरूको पहलमा यस बैठकको मितिबाट दुई महिनाभित्र लण्डन क्षेत्रीय समितिको गठन गरिने प्रतिबद्धताका साथ बेलुकी ६ बजे सम्पूर्ण बैठक समापन भएको थियो । कार्यक्रमको सभापतित्व भगवान चाम्लिङले गर्नुभएको थियो ।

> यस संस्थाको मुल उद्धेश्य बेलायतमा छरिएर बसोवास गरिरहेका सम्पूर्ण नेपालीहरुमाझ चेतना फैलाउदै मातृभूमि नेपालको विकाशमा अग्रसर बनाउनु रहेको छ ।

# सङ्घीय समाजवादी पार्टीको घोषणा संसारभर हर्षोउल्लास



काठमाडौं, २२ नोभेम्बर १२, राज्य पुनर्संरचना समितिले सिफारिस गरेका १४ प्रदेश र विज्ञहरू सम्मिलित पुनर्संरचना आयोगले प्रस्ताव गरेको १० प्रदेशलाई लत्याएर आर्य र खत्रीको एकछत्र अस्थित्व कायम हुने गरी राज्यहरू निर्माण गर्नुपर्ने अडानमा नेकपा एमाले र नेपाली काँग्रेस अडेको कारण पार्टी परित्याग गरी तत्कालिन एमालेको केन्द्रीय उपाध्यक्ष असोक राईको अध्यक्षतामा आज नयाँ पार्टीको घोषणा भएको छ ।

सङ्घीय समाजवादी पार्टी, नेपाल (हाल ससफो, नेपाल) नामाकरण गरिएको पार्टीको कार्यगत नीति जातीय मुक्तिको लागि सङ्घीयता र वर्गीय मुक्तिको लागि समाजवाद भनी स्पष्ट भनिएको छ ।

संविधान निर्माणको यो चरणमा संविधानको विषय मुख्य बहस हुनुपर्ने बेलामा सिर्फ प्रधानमन्त्रीको कुर्सीका लागि मात्र केन्द्रित बनेका आर्यनको प्रतिनिधिमूलक

पार्टी एमाले, काँग्रेसप्रति जनताको आस्था घटिरहेको बेला लोकप्रिय नेता राईको नेतृत्वमा नयाँ पार्टी घोषणा हुनुले संसारभर छरिएर रहेका शोषित, उत्पीडित लगायतका नेपाली जनताहरूमा हर्षोउल्लास छाएको छ । राईले गत एमालेको केन्द्रीय महाधिवेशनमा सबैभन्दा बढी मत ल्याएर उपाध्यक्ष पद जित्नु भएको थियो ।

काठमाडौँमा आयोजित विशेष समारोहमा अध्यक्ष राईले पार्टीको नाम र झण्डाको सार्वजजिक गर्नुहुँदै ९८ जना सदस्य रहेको केन्द्रीय तदर्थ समितिको घोषणा गर्नुभएको हो । त्यसै गरी महासचिव चुनिनुभएका राजेन्द्र श्रेष्ठले पार्टीको घोषणापत्र सार्वजनिक गर्नुभयो । उपाध्यक्षहरू विजय सुब्बा, दुर्गामणि देवान, वीरबहादुर तामाङ, रकम चेम्जोङ, हेमराज राई, महोम्मद रिजवान अन्सारी र गोपाल ठाकुर रहनुभएको छ । त्यसै गरी उपमहासचिवमा अजम्बर काङमाङ, राधा तिमिल्सिना, नोर्साङ शेर्पा र सचिवमा मीना गुरूङ, हीरालाल चौधरी, कर्णबहादुर बुढामगर, रामसिंह यादव र डीबी नेपाली चयन हुनुभएको छ ।

समाजवादी पार्टीमा एमाले, काँग्रेस लगायत अन्य दल परित्याग गरेकाहरू सहभागि छन भने सबै जातजातिलाई समेटेर समावेशि बनाईएको छ । धेरैले यस पार्टीलाई बैकल्पिक शक्तिको रूपमा आस गरेका छन यद्यपी दर्शन कुन राख्ने सवालमा माक्सवाद र प्रजातान्त्रिक समाजवादको विषयमा छलफल नसिद्धिएको कारण डा. चैतन्य सुब्बा, डा. कृष्ण भट्टचन, पासाङ शेर्पा, कुमार राई लगायत सहभागि बनेका छैनन ।

काँग्रेस, एमाले जातिवादी पार्टी भएकोले त्यसको विकल्प अर्को जातिवादी पार्टी हुन सक्दैन त्यसैले सबै जातिहरूको अनुहार झल्कने साझा पार्टी आज निर्माण भएको कुरा उपाध्यक्ष महोम्मद रिजवान अन्सारीले बताउनु भयो ।

> *काँग्रेस, एमाले जातिवादी पार्टी भएकोले त्यसको विकल्प अर्को जातिवादी पार्टी हुन सक्दैन त्यसैले सबै जातिहरुको अनुहार झल्कने साझा पार्टीको निर्माण*

विदेशमा रहेका नेपालीहरूको सुविधाका लागि नेपाली समाचार डटकमले प्रत्येक्ष लाइभ प्रसारण पनि गरेको थियो भने एक शुभ चिन्तक विश्वासहाङ तिगेलाले पार्टीको वेवसाइट पार्टी घोषणा अघि नै बनाइसक्नु भएको छ । उक्त वेवसाइटबाट पनि पार्टी घोषणा कार्यक्रमलाई प्रत्यक्ष प्रसारण गरिएको थियो ।

आज ७ मङ्सिर २०६९ तदनुसार २२ नोभेम्बर २०१२ मा निर्माण भएको तदर्थ समितिले अब केही महिनाभित्र नै राष्ट्रिय महाधिवेशन गर्दै नयाँ निर्वाचनका लागि सशक्त रूपबाट लाग्ने बताएको छ ।

# नवगठित समाजवादी पार्टीलाई जनजाति महासङ्घ बेलायतको शुभकामना

गत १ डिसेम्बर १२, भर्खरै गठित सङ्घीय समाजवादी पार्टी, नेपालका अध्यक्ष असोक राईलाई बेलायतबाट शुभ कामना पठाइएको छ । देशविदेशमा छरिएर रहेका नेपाली जनताहरूको अत्यधिक मागका साथै अहिले अस्तित्वमा रहेका जातिवादी पार्टी काँग्रेस, एमाले र माओवादी पार्टीहरूबाट जनताको मुक्ति, मुलुकको समृद्धि एवम् राष्ट्र निर्माण असम्भव भएको कारण वैकल्पिक राजनैतिक सङ्गठन स्थापना भएकोमा बेलायतमा सक्रिय नेपाल आदिवासी जनजाति महासङ्घको तर्फबाट अध्यक्ष सिरीप्रसाद लिम्बु (साम्यो)ले पत्र लेखी शुभकामना दिनु भएको छ ।

आगामी २२ डिसेम्बरका दिन युकेमा अग्रगामी विचार समूहको भेला समेत बोलाइएको जानकारी गराइएको छ ।

# च्यारिटी डिनर नाइट सम्पन्न

गत १५ जुन २०१४ का दिन नेपाली सङ्घीय समाज युकेको च्यारिटी डिनर सम्पन्न भएको छ । आगामी १७ अगष्टको दिन सङ्घीय समाज युकेको एतिहासिक प्रथम अधिवेशन सफल बनाउनको लागि प्रचारप्रसार, आर्थिक सङ्कलन तथा आपसी चिनजान बढाउने उद्देश्यले अल्डरसटको भेटघाट रेष्टुरेष्टमा उक्त च्यारिटी डिनरको आयोजना गरिएको हो ।

कार्यक्रममा नेपाल आदिवासी जनजाति महासङ्घका अध्यक्ष सिरी लिम्बु, डा. कविताराम श्रेष्ठ, जंग सुनुवार, विश्वासदीप तिगेला, कृष्ण कुमार राई, योगेश राई, धर्म तामाङ लगायतले बोल्नु भएको थियो । नेपालबाट पाल्नुभएका पाहुना गायक कुवेर राई र गायिका आभा मुकारूङले पनि गीत प्रस्तुत गर्नुभएको थियो भने गायक किसन राईले पनि आफ्नो मौलिक गीत सुनाउनु भएको थियो ।

सङ्घीय समाज तदर्थ समितिका अध्यक्ष भगवान चाम्लिङको सभापतित्वमा सम्पन्न उक्त कार्यक्रम जगत गुरुङले सञ्चालन गर्नुभएको थियो ।

विचार



# नेपाली राजनीति नैतिकवान बन्ला ?

**काङमाङ नरेश राई**

मानव सभ्याताको कुन विकासक्रमलाई पार गरेर हामी नेपालीहरू कहाँसम्म आइपुगेका छौं ? जङ्गली युग, दासयगु, सामन्तवाद, पुँजीवाद, समाजवादको उतरार्द्धपछि स्वघोषित साम्यवादको परिकल्पाना हुन सक्छ मानव सभ्यातको विकास । यी विकासक्रमभित्र हामी कहाँ रहेका छौं र कसरी त्यसलाई प्रयोगमा ल्याइरहेका छौं ।

हाम्रो देश नेपालजस्ता अल्पकिकासित राष्ट्रहरूमा जनताहरू धेरै प्रतिसत अशिक्षित र गरिबीको रेखामुनि रहेका हुन्छन् । फेरि अल्पविकासित राष्ट्रहरूमा विचार सिद्धान्तको अमूर्त भारी बोकाएर जनतामाथि नेताहरूले शासन गरिरहेका हुन्छन् । वास्तवमा जनतालाई शिक्षित बनाई, आर्थिक पक्षलाई मजबुद बनाउँदै जानु पर्ने हो तर, नेताहरू किन यस्तो गर्न चाहदैनन् त ? नेपालीहरूले छातीमा हात राखी, कुनैपनि पार्टीको कार्यकर्ता नभई, नेपाली जनताको जगमा उभिएर राष्ट्रियताका बारेमा भन्न सक्नु पर्दछ । र, देशमा राजनैति स्थिरता रहन सक्छ ।

एक छाकको पिरमा जीवन यापन गरिरहेका जनतालाई चुनावमा एक छाक मीठो खान र एक रात राम्रो बस्ने व्यवस्था गरिदिएर धनी नेता र धनी पार्टीहरूले आफ्नो पक्षमा मत खसाल्न बाध्य पार्छन् । जनताहरू गरिबीको कारण यसरी निरीह भएका छन् ।

जनताहरूले देशका लागि तिरेको करले देशको भरथेग हुने हो । जनताहरूले

तिरेको करहरू सही सदुपयोग भएका छन् कि छैनन् ? जनताहरूले खोज्नु र बुझ्नै पर्ने आजको पहिलो आवश्यकता हो । करहरू उचित सदुपयोग नगरेका कारणले नेपाल संसारको गरिब मुलुक माथि दिनानु दिन झन कङ्गाल बनिरहेको छ । अझ त्यसमाथि भ्रष्टचार । जनताले तिरेका करहरू र दातृ संस्थाहरूले दिएका सहयोगहरू उचित ठाउँमा प्रयोग गर्न नसक्नु, पार्टी र नेतालाई भाग बण्डा लगाउने संस्कारको अन्त्य हुन अनिवार्य आवश्यक छ । तर भ्रष्टचार गरेर जनतालाई गरिबीको रेखामुनि पार्ने तिनै भ्रष्टचारी नेताहरूलाई जनताहरूले आफ्नो अधिकार बेच्न बाध्य भएका छन् । त्यस्ता पार्टी र नेताको झोला बोकेर जनताहरू कहिलेसम्म हिंड्ने ?

नेताहरूले मात्र देश बिगारेका छैनन् । नेपाली जनता आफै पनि समस्याको एउटा पाटो बनिरहेका छन् । आफ्नै परिश्रमले आफैलाई शोषण गरिरहेको जनताले जबसम्म बुझ्नदैनन् तबसम्म देश कङ्गाल बन्दै जानु हो । भ्रष्टचार आरोपमा जेलनेल भोगेका नेता र तिनैका पार्टीलाई जिताएर नेपाली जनताले बारम्बर पठाई रहेका छन् । यो देशको लागि सबैभन्दा ठूलो दुर्भाग्य हो ।

भ्रष्टचार अभियोगमा नेपाली काँग्रेसका नेता खुमबहादुर खड्का जेलबाट रिहा हुने दिन, उनका समर्थकहरू कारमाथि फूलको माला बोकेर स्वागत गर्न गए । उनी संविधानसभामा उठ्न त पाएनन् तर उनले आफ्नी श्रीमतीलाई सभासद बनाउन सफल भए । नेपाली काँग्रेसका वरिष्ठ नेता शेरबहादुर देउवाले आफ्नो श्रीमती आरजु देउवालाई पनि सभासद बनाए । योग्य व्यक्ति भएमा आफ्नै श्रीमतीलाई पनि त्यो स्थान दिनु सक्नु पर्दछ । नेपाली राजनीतिमा भन्दा अन्य क्षेत्रमा चलेको नाम हो आरजु देउवा । यसरी आफ्नी श्रीमतीलाई साथैमा लगेर जाने अन्य पार्टीका अन्य नेताहरू पनि प्रशस्त छन् । प्रचण्डको घरबाट मात्र दोस्रो संविधानसभा चुनाबमा कति जना उम्मेदवार थिए ? यो सबैलाई थाहा भएको कुरो हो । नेपाली जनता आफै वकिल, आफै न्यायाधीश आफ्नै इजालासमा बहस गरेर निर्णय गर्नु पर्ने बेला आइसकेको छ । नेताहरूले आफ्नो नैतिकतालाई आफैले अख्तियारी नगरेसम्म नेपाल राष्ट्र समृद्धशाली बन्न लामो समय पर्खनु पर्ने देखिन्छ र नेता स्वयम् आफैले बुझ्ने विषय पनि हो ।

नेपाली राजनैतिक पार्टीहरूले आफ्नो विचार र सिद्धान्तलाई प्रयोगमा ल्याएको देखिँदैन । यसको अर्थ नेपाली नेताहरू नैतिकवान र परिवर्तकारी छैनन् । समाजवादको सिद्धान्तलाई मागी खाने भाँडो बनाउने पुरानो पार्टी हो नेपाली काँग्रेस । उसले बोकेको सिद्धान्तलाई बस्तुगत रूपमा कति प्रयोगमा ल्याएका छन् र कतिको उन्नती, प्रगति गरिरहेका छन् त ? यसको मूल्याङ्कन नेपाली जनताले गर्न र बुझ्न सकेका छैनन् । बुझ्केकाहरूले मागी खाने भाडो बनाएका छन् । नेपाली काँग्रेस पार्टीमा समाजवादको

अवशेष प्रदीप गिरी मात्र बाँकी रहेका छन् भन्दा कुनै विवादको विषय हैन ।

नेताहरू दायाँ-बायाँ दादा र डनहरू लिएर आफूलाई बलियो मान्छेको रूपमा उभ्याइरहेका छन् । भ्रष्टचार गरेको पैसाले त्यतातिर लाँदो हो । देशको कानुनलाई हातमा लिएर स्वातन्त्र न्यायपालिकालाई फोहोर बनाइसकेका छन् । यसको अर्थ नेपाली काँग्रेसले अवलम्बन गरेको समाजवाद कहाँ छ ? कति भयो वीपी कोइरालाको पालादेखि समाजवादको व्याख्य गर्न थालेको ? नेपाली काँग्रेसको सिद्धान्त समाजवाद भएता पनि बस्तुगत रूपमा उत्तर सामन्तवाद र बटम पोखेलको । वियोगान्त समयमा उल्टै उखानटुक्का जोडेर मान्छे हसाउँछन् पाटी अध्यक्ष केपी ओली । हसाउँने नेता र हास्ने `मालेका कार्यकर्ताहरू कस्ता होलान् ? जातीय विभेदको अन्त्य नभई, वर्गीय मुक्ति असम्भव छ भन्ने कुरो मदन भण्डारीले यी बिषयबस्तुहरू नजिकबाट बुझेका थिए । उनले खुल्ला मञ्चमा अभिव्यक्त गरेको भाषणहरूले पुष्टि गरेको छ । उनी जीवितै भए उनको भाषण कार्यान्वयन हुन्थो वा हुन्न थियो, यसै भन्न सकिन्न । तर मदन भण्डारीले प्रतिपादन गरेको सिद्धान्तलाई बोकेजस्तो गरेर मागी खाने रित्तो भाडो बनाएको छ

**नेपाली राजनैतिक पार्टीहरुले आफ्नो विचार र सिद्धान्तलाई प्रयोगमा ल्याएको देखिदैन । यसको अर्थ नेपाली नेताहरु नैतिकवान र परिवर्तकारी छैनन् ।**

पुँजीवादको शैलीमा नै रहेको देखिन्छ ।

नेपालमा कम्युनिष्ट सिद्धान्त बोक्ने एमाओवादी, एमाले लगायत धेरै पार्टीहरू छन् । ती नेताहरू पुँजीवादी शैलीमा जीवन यापन गरिरहेका छन् । बिशेष गरेर नेकपा एमाले त सामन्तवादी युगमा नै हिंडिरहेको देखिन्छ । डनहरू वरिपरि राखेर देशको कानुनलाई आफ्नो हातमा पार्न खप्पिस भएका छन् । सँगै क्रान्तिमा निस्किएका सहपाठी पार्टी कार्यालय अगाडि झुण्डिएर आत्मदाहा गर्दासम्म आँसु झर्दैन माधबको, झलनाथको, केपीको, बामदेव र ईश्वर एमाले । एमाले बस्तुगत सिद्धान्त उत्तर सामन्तवाद र बटम पुँजीवादको भन्दा माथि रहेको छैन ।

एमाओवादी केन्द्र पनि नाम मात्रको कम्युनिष्ट पार्टी हो । ऊ एमाले र काँग्रेस भन्दा एक स्टेप मात्र माथि रहेको हो कि भन्ने चाहिं कता-कता लाग्छ । प्रचण्ड कहिले मिथक बन्न खोज्छ, कहिले पुष्प कमाल दाहाल बन्न खोज्छ । प्रचण्ड देखि राज्य समितिका नेताहरूले राम्ररी नै विलासी जीवन बिताइरहेका छन् ।

बैद्यले नेतृत्व गरेको माओवादी मार्क्स, एङ्गेल्स, लेनिन र माओवादका

पुस्तकहरूको अध्ययनमा सीमित रहेको भन्ने लाग्छ । नेत्रविक्रम चन्द बद्लिँदो मौषम हो । घुमाउरो हाइवेमा ट्रनिङ गर्न सक्छन् सम्दैनन् हेर्न बाँकी छ । विजय गच्छदार सपनामा पनि कुर्सी देखिरहन्छन् ।

भखरै तीन पार्टी मिली बेनेको सङ्घीय समाजवादी फोरम, नेपाल परीक्षणकालमा अहिले उदाएको छ । यसले समाजवादलाई जनताको घरमा कसरी पुर्‍याउँछ त्यो पनि बाँकी नै छ ।

संसारमा युवाहरूले देश चलाउँछन् । संसारको शक्तिशाली राष्ट्र अमेरिकाका राष्ट्रपति वारक ओवामा ४७ वर्षको उमेरमा पहिलो पटक राष्ट्रपति निर्वाचित भएका हुन् । उनी अहिले ५३ वर्ष पुगेका छन् । उनी दोस्रो कार्यकालमा छन् । टोनी ब्लेयर ४४ वर्षको उमेरमा बेलायतका प्रधानमन्त्री भएका थिए । डेभिड क्यामरून ४३ वर्षमा पहिलो पटक बेलायतको प्रधानमन्त्री भएका थिए । अहिले ४८ वर्षका छन् । अपोजिसन लिडर पूर्व लेबर पार्टीका लिडर एडवार्ड मिलीवान ४५ वर्षका हुन् । ७ मे सन २०१५ मा सम्पन्न बेलायतको चुनावमा लेवर पार्टी दोस्रो नम्बरमा आएपछि २४ घण्टाभित्र पार्टी लिडरबाट राजीनामा दिए । लेबरल डेमोक्रेट चुनावमा लज्जास्पद हार बेहोरेपछि पार्टी लिडर निक क्लेगले राजीनामा दिए । उनी ४८ वर्षका हुन् । उनी ४३ वर्षको उमेरमा उपप्रधानमन्त्री भएका थिए । युकिभका नेता नाइगेल फारज ५१ वर्षका छन् । चुनावमा आफ्नो पार्टीले सोचेजति परिणाम ल्याउन नसक्दा राजीनामा दिएका थिए तर उनको राजीनामा स्वीकार भएन । तत्कालीन लेबर पार्टी लिडर एडवार्ड मिलीवान र तत्कालीन लेबरल डेमोक्रेट पार्टीका लिडर निक क्लेग अब बेलायती राजनीतिमा कहिल्यै पनि पार्टी लिडर बनेर आउने छैनन् । विश्वको नैतिकवान राजनीतिकलाई नेपालका पार्टी र नेताहरूले अध्ययन गरेर प्रयोग गर्न सक्नु अनिवार्य आवश्यकता हो ।

युवाहरू भनेको बरको विरूवा हुन् । गमलामा रोपेर कोठामा वा घर अगाडिको फूलबारीमा राख्छु भन्नु गलत हो । गमला फुटाएर पनि आफ्नो आकार र उचाई लिई छाड्छ बरको विरूवाले । युवाहरू भनेको बरको रूख नै हो । त्यसैले युवाहरूलाई पार्टीको नेतृत्व दिन बाटो छेक्नु हुन्न । युवाहरूलाई पार्टीको कार्यभार सम्हाल्न दिन सके मात्र देशलाई परिवर्तन गर्न सकिन्छ । सम्भवत :उपेन्द्र यादव नेपालको कलिलो पार्टी नेता हुन सक्छन् । अब उनले आउने राष्ट्रिय सम्मेलनबाट युवालाई महत्वपूर्ण ठाउँहरूमा लान सके मात्र पार्टीले राष्ट्रमा महत्वपूर्ण काम गर्न सक्दछ । उनले यो कुरा व्यवहारमा कति परिवर्तन गर्ने हुन् हेर्न बाँकी नै छ ।

६०-६२ वर्ष माथि उमेर पुगेका नेताहरू स्वत: पार्टीको नेतृत्वबाट हट्न सक्नु पर्दछ र राजनीतिक अवकाश लिन सकेमा परिवर्तनको नमुना बन्न सक्छन् । भाषण र नारामा मात्र सीमित भई व्यक्ति (नेता) स्वयम् परिवर्तन हुन नसके परिवर्तनकारी हुन सक्दैन । यथास्थितीवादी हुनेछन्।

# केहो नेपाली क्रान्तिको मार्गदर्शक सिद्धान्त सङ्घीय समाजवाद ?



सङ्घीय समाजवाद नेपाली क्रान्तिको मार्ग दर्शक सिद्धान्त हो । विश्वमा सङ्घीयता र समाजवाद प्रयोगका आआफ्नै तरिका र अनुभवहरू छन् । नेपालमा समाजवादको कुरा नेपाली काँग्रेस र कम्युनिष्ट पार्टीहरूले आआफ्नै तरिकाले उठाए पनि सङ्घीयताको प्रश्नमा तिनीहरू कहिल्यै प्रष्ट भएनन् । सङ्घीय व्यवस्थामा सार्वभौम सत्ताको बाँडफाँट गरी केन्द्रीय सत्तालाई प्रदेशहरूको सङ्घको रूपमा स्थापित गरिन्छ । तर नेपालमा प्रमुख राजनीतिक दलहरूले केन्द्रीय सत्तालाई प्रदेशहरूको सङ्घको रूपमा नभई सङ्घीयतालाई प्रदेश संरचना निर्माणको रूपमा मात्र बुझेका छन् । नेपालका लालशाहीहरूले पनि यसलाई भूगोलको बाँडफाँटको रूपमा मात्र चित्रित गरे । वास्तवमा प्रदेश/राज्य त एकात्मक राज्यको एकाइको रूपमा पनि

बन्न सक्दछ । जस्तो बेलायतमा राज्य छ भने चीन, बङ्गलादेश, श्रीलङ्का आदि एकात्मक देशमा प्रदेश बनेका छन् । यी देशहरूमा प्रदेश/राज्यहरू केन्द्रको एकाइ वा संरचना मात्र हो भने सङ्घीय राज्यमा प्रदेशहरू संरचना मात्र नभई राजकीय सत्ता र शासनाधिकार सम्पन्न हुन्छन् । त्यसैले हामीले सङ्घीय शासनमा आधारित समाजवादलाई सङ्घीय समाजवादको रूपमा सिद्धान्तकृत गरेका छौं ।

नेपाल विविध जाति, भाषा, धर्म संस्कृति, भूगोल, अर्थतन्त्र र मनोविज्ञानले बनेको छ । त्यसभित्र थुप्रै राष्ट्रियताहरू छन् । ती राष्ट्रियताहरूलाई पनि उनीहरूको पहिचान र स्वायत्तताको अधिकार स्थापित गरी एकीकृत नेपालको स्वाायत्त राज्य निर्माण गर्नु पर्छ । नेपालमा विविधतामा एक्ताको नारा धेरै दिइयो तर व्यवहारमा यहाँको उत्पीडित राष्ट्रियताहरूको अस्तित्व र पहिचान स्वीकार गरिएन । वास्तवमा नेपालमा उत्पीडित जाति र जनजातिहरूको ऐतिहासिक, भाषिक, सांस्कृतिक पहिचान र अधिकार खोसिएको भएरै सङ्घीयता चाहिएको हो । अलग-अलग भाषा, जाति र संस्कृति हुँदैनथ्यो भने त देश जतिसुकै ठूलो आकारको भए पनि आजको भुमण्डलीकरणको युग जहाँ सम्पूर्ण विश्व नै साझा घरको नारा लागि रहेको छ, त्यस्तो स्थितिमा सङ्घीयता चाहिँदैन । तर नेपालमा आफ्नो ऐतिहासिक पृष्ठभूमि र मानव भूगोल भएका धेरै राष्ट्रियताहरू छन् जो २४८ वर्षदेखि उत्पीडित छन् । त्यसैले ती सबै राष्ट्रियताहरूलाई केन्द्रमा साझा राज्य र प्रदेशहरूमा स्वायत्त राज्य स्थापना गरी समानता र स्वशासनको अनूभूति दिन नै सङ्घीयताको आवश्यकता परेको हो ।

विश्वमा राज्यहरूको जन्म वर्गहरूको उत्पत्तिसँगै भयो । प्रारम्भमा त्यस्ता राज्यहरू एकात्मक प्रकृतिका थिए । युरोपमा पुँजीवादी क्रान्तिको परिणामस्वरूप राष्ट्रिय राज्यहरूको स्थापनाले धेरै सङ्ख्यामा एकात्मक राज्यहरूको जन्म भयो । अन्य महादेशहरूमा पनि ठूलो सङ्ख्यामा एकात्मक राज्यहरू जन्मे । त्यस्ता एकात्मक राज्यहरू सामुहिक सुरक्षा, आर्थिक प्रगति र बजार विस्तारबाट हुने फाइदा प्राप्त गर्नका लागि आफूमा अन्तर्निहित राज्यशक्तिको केही हिस्सा नव स्थापित केन्द्रीय संरचनालाई दिई एकाकार भएर सङ्घीय राज्य बने । नेपालमा अहिले पहिल्यै अस्तित्व भएका विभिन्न राज्यहरूबिचको सम्झौताबाट नभई केन्द्रमा रहेको राज्यशक्तिलाई अकेन्द्रिकरणको मान्यताको आधारमा स्वायत्त प्रदेशहरू बनाई राज्यशक्ति बाँडफाँट गर्ने प्रकृयाबाट सङ्घीय राज्य निर्माण हुँदै छ । ती दुईमध्ये जुनसुकै प्रकृयाबाट सङ्घीयतामा गए पनि त्यसको आधारभूत पक्ष भनेको देशको राजकीय शक्ति र शासनाधिकारको बाँडफाँट नै हो ।

अहिलेको विश्वमा सङ्घीयता र समाजवादको एक मात्र बाटो छैन । विज्ञान र प्रविधिको विकाससँगै यसका विविध प्रारूपहरू विकास भएका छन् । २०६२/६३ सालको जनक्रान्तिपछि नेपाल पुँजीवादी युगमा प्रवेश गरेको छ । यसको राजनीतिक स्वरूप सङ्घीय लोकतान्त्रिक गणतन्त्र हो । यस्तो प्रकृतिको गणतन्त्रमा प्रतिस्पर्धा र पहलद्वारा आफ्नो श्रेष्ठता स्थापित गरेर मात्र कुनै पनि राजनीतिक पार्टीले राज्यको नेतृत्व गर्ने अवसर पाउँदछ । राज्यमा पुँजीपति वर्ग हाबि हुँदासम्म राज्य लोक कल्याणकारी हुन सक्दैन । यस्तो राज्य व्यवस्थामा कमिशनखोर तथा वैदेशिक एकाधिकार पुँजीपति वर्गको शोषण, उत्पीडन तथा तिनीहरूको शासकीय चरित्र जति मात्रामा उदागिन्छ, श्रमजीवी वर्ग त्यही मात्रामा राज्यसत्तामा स्थापित हुँदै जान्छ । त्यसैले सङ्घीय लोकतान्त्रिक गणतन्त्रलाई सुदृढ गर्नका लागि श्रमजीवी वर्गको प्रतिनिधित्व गर्ने पार्टीहरूले पहल गर्नु पर्दछ । जुन मात्रामा हामीले त्यस कार्यलाई सम्पन्न गर्न सक्ने छौं, त्यही मात्रामा नेपालमा सङ्घीय लोकतान्त्रिक गणतन्त्र सुदृढ हुने छ । त्यसले नेपालको राज्य व्यवस्थालाई सङ्घीय समाजवादमा सङ्क्रमणको आधार निर्माण गर्ने छ ।

सङ्घीय समाजवाद नेपाली क्रान्तिको व्यवहारमा विकसित समाजवादी लोकतन्त्र हो । यसले नेपाली समाजको सङ्घीयकरण र उत्पादनका साधनहरूको सामाजिकीकरण गर्ने छ । यस्तो व्यवस्थामा राज्यका सबै तहमा उत्पादनका साधनहरूमाथि सार्वजनिक, सामुदायिक तथा मिश्रित स्वामित्वका विविध रूपहरू प्रयोग गरिने छ । यस अन्तर्गत राजकीय, सहकारी तथा निजी स्वामित्वको मिश्रित अर्थनीति तथा सार्वजनिक- निजी साझेदारीको नीतिलाई बढावा दिइने छ । नेपालको आफ्नो मौलिक प्रकृतिको परम्मपरागत सामुदायिक स्वामित्वको प्रणालीलाई सङ्घीय समाजवाद अनुरूप व्यवस्थापन गरिने छ । सङ्घीय समाजवादमा देशको उत्पादकत्वको वृद्धि र त्यसको समन्यायिक वितरणलाई प्रभावकारी बनाई जीवनका सबै अवसरहरू सबैका लागि विना भेदभाव समान रूपमा उपलब्ध गराइने छ । जनतालाई भय, आतङ्क, भोक, रोग, बेरोजगारी, अशिक्षा, अन्धविश्वास, कुरीति आदिलाई समाजबाट अन्त्य गरिने छ । यो बैचारिक क्षेत्रमा हामीले अगाडि सारेको विकल्प हो ।

हिलेको विश्व वैचारिक रूपले समाजवादी लोकतन्त्रको बाटो लिने कि पुँजीवादी लोकतन्त्रको बाटो लिने भन्ने आधारमा नै विभाजित छ । यी दुईको बिचमा तेस्रो बाटोको पनि यदाकदा चर्चा हुने गरेको छ । तर त्यो प्रवृत्ति कुनै न कुनै रूपमा दुई मध्ये एउटा प्रवृत्तिसँगै

जोडिएका छन् । शीतयुद्धको अन्त्यपछि पुँजीवाद र समाजवादको संयोजनको कुरा पहिलाभन्दा जोडदार रूपमा उठे । तर दुई विपरीत तत्व एकसाथ रहे पनि त्यसभित्र सङ्घर्ष एउटा अनिवार्य कुरा हो । अहिले विश्व पुँजीवाद आक्रामक रूपमा अगाडि वढेको छ । तर त्यसको प्रतिरोध पनि विश्वव्यापी रूपमा नै भइ रहेको छ । यो सङ्घर्ष त्यस्तो सार्वभौम, दीर्घकालीन र अनिवार्य प्रकृया हो, जो हाम्रो इच्छाभन्दा स्वतन्त्र रूपमा अघि बढिरहेको हुन्छ । त्यसभित्र अनेकौं गतिरोध, धक्का र अग्रगतिहरू हुनु अनिवार्य हुन्छ । उन्नाइसौं र बीसौं शताब्दीमा प्रयोग भएका समाजवादका प्रारूपहरूले पुँजीवादमाथि समाजवादको श्रेष्ठतालाई व्यवहारमा उतार्न सकेन । त्यसले अमूर्त सामूहिकताको कुरा गऱ्यो । समष्टिलाई देख्यो तर व्यष्टिलाई देख्न सकेन । उसले समाज देख्यो तर त्यहाँ भित्रका व्यक्तिलाई देखेन । व्यक्तिका आफ्नो अलग स्वभावजन्य चरित्र र विविधता हुन्छ । तिनलाई समेट्नुको सट्टा सबैलाई एकमुष्ट एउटै डालोमा राख्यो । त्यसैले त्यतिबेलाको समाजवादी प्रयोग असफल भए । एकाइसौं शताब्दीको समाजवादले यो चुनौतिलाई सामना गर्नु पर्छ । सङ्घीय समाजवाद दर्शनको हिसाबले द्वन्द्वात्मक तथा ऐतिहासिक भौतिकवादी, राजनीतिक हिसाबले लोकतान्त्रिक र सामाजिक न्यायको हिसाबले लोक कल्याणकारी भएकाले पुँजीवादको तुलनामा यसको श्रेष्ठता सुनिश्चित छ । यसको प्रकाशमा हामीले नेपाललाई एकाइसौं शताब्दीमा एउटा समृद्ध समाजवादी मुलुकमा रूपान्तरित गर्न सक्ने छौं ।

२१ औं शताब्दीले विभिन्न देशहरूका निम्ति समाजवाद प्रयोगका नयाँ तरिका, प्रकृया र बाटाहरू खोलेका छन् । फिनल्याण्ड लगायत स्क्यान्डिनेभियाका मुलुकहरूमा यसको सफल प्रयोग भइ रहेको छ । त्यस क्षेत्रमा राज्यको लोकल्याणकारी चरित्रको नमूना देख्न सकिन्छ । तर त्यहाँको समाजवाद एकात्मक मोडेलको रहेको छ । चीनमा समाजवादी बजार अर्थतन्त्रको प्रयोगले विकासको लहर सिर्जना गरेको छ । चीनको विकास अहिले विश्वले नै नियाली रहेको छ । तर चीनको समाजवाद पनि एकात्मक मोडेलकै रहेको छ । त्यसरी नै ल्याटिन अमेरिकाका ब्राजिल, भेनेजुयला लगायतका मुलुकहरूले पनि समाजवादको आफ्नै बाटो विकास गरेका छन् । त्यहाँका धेरैजसो मुलुकहरूमा सङ्घीय शासन प्रणालीलाई पनि समाजवादसँगै प्रयोग गरेका छन् । यी समाजवाद प्रयोगका केही सफल नमूनाहरू हुन । हामीले पनि समाजवाद प्रयोगको आफ्नै मौलिक बाटो विकास गर्नु पर्दछ । सङ्घीय शासन प्रणाली सहितको समाजवाद हाम्रो

मौलिक बाटो हो । हामीले सङ्घीयतालाई देशका उत्पीडित राष्ट्रियताहरूमाथि भइ रहेको विभेद मुक्तिको आधारको रूपमा र समाजवादलाई श्रमजीवी वर्गको मुक्तिको आधारको रूपमा लिएका छौं । सङ्घीय शासन प्रणाली यसको रूप हो भने समाजवादी सामाजिक-आर्थिक व्यवस्था यसको सार हो । यसले नेपाललाई राजनीतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, भाषिक, धार्मिक, लैङ्गिक, क्षेत्रीय सबै खाले विभेदहरूबाट मुक्त गर्ने छ । हामीले ती लक्ष्यहरूलाई सूत्रवद्ध गरी जातीय/राष्ट्रिय मुक्तिका लागि सङ्घीयता र वर्गीय मुक्तिका लागि समाजवादको नारा अगाडि सारेका छौं । सङ्घीयता र समाजवाद यसका दुई महत्त्वपूर्ण खम्बा हुन् । हामीले यी दुईवटा महत्त्वपूर्ण विषयलाई समेटेर नेपाली क्रान्तिको सिद्धान्तको रूपमा सङ्घीय समाजवाद प्रस्तुत गरेका छौं ।

सङ्घीय समाजवाद नेपाली काङ्ग्रेसले भने जस्तो पुँजीवाद र समाजवादको संयोजन गरिएको समाजवाद होइन न त कम्युनिष्ट पार्टीहरूले भने जस्तो व्यक्तिको पहलकदमी र निजत्वलाई समाप्त गरिने राजकीय समाजवाद नै हो । नेपालमा लोकतान्त्रिक समाजवादको प्रयोग पुँजीवादको कलात्मक प्रयोगको रूपमा भए भने यसले नेपालको बहुराष्ट्रिय चरित्रलाई अङ्गिकार नगरेको मात्र होइन एकात्मक राज्य, संवैधानिक राजतन्त्र, केन्द्रिकृत शासनको प्रयोग गरे । त्यसरी नै कम्युनिष्ट पार्टीहरूले पनि समाजवादको प्रयोग एकात्मक, केन्द्रिकृत, असमावेशी र असमानुपतिक रूपले नै गरे । यी दुबै सिद्धान्त नेपालमा विकेन्द्रीकरण र स्थानीय स्वशासनभन्दा माथि उठ्न सकेन । त्यसैले हामीले नेपालको विशिष्ट परिस्थितिमा समाजवादको आफ्नै बाटो विकास गरेका छौं । सामाजिक क्रान्तिको उद्भव र विकासको दौरानमा यो अझ समृद्ध हुँदै जाने छ । सामान्यतः सङ्घीय समाजवादका आधारभूत तत्वहरू भनेको जनताको सार्वभौमिकतामा आधारित सङ्घीय शासन, उत्पादनका साधनहरूमा सामाजिकीकरण भएको लोक कल्याणकारी राज्यको सृजना र लोकतन्त्रको शास्वत मुल्य र मान्यताको आधारमा राज्य व्यवस्थाको सञ्चालन हो । यस्तो व्यवस्थामा प्रत्येक व्यक्तिले आफ्नो योग्यता अनुसार काम र काम अनुसार दाम पाउनु पर्दछ । यस नीतिले व्यक्तिको पहलकद्मी र निजत्वलाई प्रष्फुटिट गर्दछ । सङ्घीय समाजवादी फोरम, नेपालको घोषणा पत्रमा यसबारे निम्नानुसार उल्लेख गरिएको छ -

'नेपाली क्रान्तिको मार्ग दर्शक सिद्धान्त सङ्घीय समाजवाद हो । सङ्घीय समाजवाद भनेको नेपाली क्रान्तिको व्यवहारमा विकसित बहुराष्ट्रिय

समाजवाद हो । यो राजनीतिक लोकतन्त्र मात्र होइन, आर्थिक, सामाजिक तथा सांस्कृतिक लोकतन्त्र पनि हो । यस अर्थमा यो नेपाली समाजको लोकतान्त्रिकरणको समग्र सिद्धान्त हो । यो पुँजीवादी लोकतान्त्रिक व्यवस्था नभई समाजवादी लोकतान्त्रिक व्यवस्था हो । सङ्घीय समाजवादले सङ्घीयतालाई जातिहरूको पहिचान र अधिकार, बहुराष्ट्रिय राज्यको प्रवर्द्धन, मुलुकको भौगोलिक अखण्डता र स्वाधीनताका आधारका रूपमा र समाजवादी लोकतन्त्रलाई राजनीतिक–आर्थिक पद्धतिका रूपमा लिएको छ । यस व्यवस्थामा जनताले राजनीतिक रूपमा स्वतन्त्रता र आर्थिक रूपमा समानताको अनुभव गर्ने छन् । मार्क्सवाद र विश्वभरिकै समाजवादी आन्दोलनका सकारात्मक योगदानहरू यसको आधार/स्रोत हुन् । सङ्घीय समाजवाद कुनै देशको अन्ध अनुकरण नभई आफ्नो मौलिक विशेषतामा आधारित हुने छ । यसलाई समाजको विकास, नेपाली जनताको चेतना र विचारधारात्मक तथा सांस्कृतिक स्तरको उन्नयनसँगै समृद र परिष्कृत गर्दै लगिने छ ।. मानव अधिकारको विश्वव्यापी घोषणा, अन्तर्राष्ट्रिय मानवीय कानुन र मानव अधिकार सम्बन्धी आधारभूत सिद्धान्त र मान्यताहरूका साथै सबै प्रकारका शोषण, दमन र विभेदबाट जनतालाई मुक्त गरिने छ । जनताको सर्वोच्चता, सङ्घीय शासन, बालिग मताधिकार, आवधिक निर्वाचन, प्रतिस्पर्धात्मक बहुदलीय व्यवस्था, समानुपातिक निर्वाचन प्रणाली, संवैधानिक तथा कानुनी राज्य, मौलिक एवम् मानव अधिकार, शक्ति पृथकीकरण, स्वतन्त्र न्यायपालिका, प्रेस स्वतन्त्रता, समावेशी लोकतन्त्र, आत्मनिर्णयको अधिकार, जातीय/क्षेत्रीय स्वशासन, स्थानीय स्वायत्त सरकार, लोक कल्याणकारी राज्य र सामाजिक न्यायको सिद्धान्तलाई आत्मसात गर्दै शिक्षा, स्वास्थ्य, रोजगार, आवास, खाद्य सम्प्रभुता र सामाजिक सुरक्षाको अधिकारलाई मौलिक हकको रूपमा स्थापित गरिने छ र सोको दायित्व राज्यले नै बहन गर्नु पर्ने व्यवस्था गरिने छ ।" (सङ्घीय समाजवादी फोरम नेपालको घोषणा पत्र पृष्ठ ४)

पार्टी एकीकरणसँगै सङ्घीय समाजवादी फोरम, नेपालले आफ्नो सङ्गठनात्मक सिद्धान्त पनि विकास गरेको छ । समाजवादी लोकतन्त्रमा विश्वास गर्ने पार्टी भएकाले हामीले लोकतन्त्र र अकेन्द्रिकरणको सिद्धान्तलाई सम्बोधन गरी यसलाई लोकतान्त्रिक अकेन्द्रीयताको रूपमा सूत्रबद्ध गरेका छौं । लोकतन्त्र विचारको स्वतन्त्रता र पार्टी निर्णयको कार्यान्वयनमा एकरूपतासँग सम्बन्धित सवाल हो भने अकेन्द्रीयता प्रत्येक तहको समितिलाई आफ्नो क्षेत्राधिकारभित्रका विषयमा निर्णय गर्ने र कार्यान्वयन गर्ने

अधिकारसँग सम्बन्धित सवाल हो । पार्टीभित्र लोकतान्त्रिक अकेन्द्रीयतालाई बलियो वनाउन प्रत्येक तहको समितिमा अन्तर पार्टी लोकतन्त्रको प्रत्याभूति हुनु पर्दछ । अन्तर पार्टी लोकतन्त्रको सार समितिमा आवद्ध सदस्यहरूको सर्वोच्चता र पार्टीको सार्वभौम सत्ता कार्यकर्ताहरूमा रहने व्यवस्था हो । पार्टीमा प्रत्यक समितिहरू निर्वाचित हुनु पर्दछ । पार्टीभित्र हार्दिकता, एक्ता र मैत्रीभावको विकास भएमा मात्र अन्तर पार्टी लोकतन्त्र सुदृढ हुन्छ । पार्टीभित्र लोकतन्त्रको परिणाम अराजकता र अकेन्द्रीयताका परिणाम स्वच्छन्दता हुनु हुँदैन । लोकतान्त्रिक अकेन्द्रीयता पार्टीको सङ्गठनात्मक अनुशासनभित्र अभ्यास हुनु पर्दछ । पार्टीभित्र हुर्कन सक्ने पुँजीवादी चिन्तन, गुटगत गतिविधि र अवसरवादको अन्त्य र पार्टीलाई व्यक्तिवादी, अराजकतावादी, सुविधाभोगी प्रवृत्तिबाट जोगाउन समाजवादी दृष्टिकोण तथा क्रान्तिकारी जुझारूपनाका साथै पार्टी अनुशासनको पालना आवश्यक छ । सङ्घीय समाजवादका उपरोक्त बैचारिक तथा सैद्धान्तिक मान्यताहरूको आधारमा सङ्घीय समाजवादका आधारभूत विशेषताहरूलाई निम्नानुसार सुत्रिकृत गर्न सकिन्छ ।

## ५.१. सङ्घीय शासन

सङ्घराज्य भनेको प्रादेशिक राज्यहरूको सङ्घ हो । यस्तो राज्य व्यवस्थामा एउटै भूगोलभित्र दुई वा दुईभन्दा बढी तहका सरकारहरूको अस्तित्व हुन्छ । तिनीहरूबिच संवैधानिक रूपमा सार्वभौम सत्ता, राजकीय शक्ति र शासनाधिकारको बाँडफाँट गर्नु नै सङ्घीयता हो । नेपालको शासन प्रणाली लामो समयसम्म एकात्मक तथा केन्द्रीकृत रह्यो । जनताले आफ्नो निकट सत्ताको उपभोग गर्न पाएनन् । त्यसैले सङ्घीय समाजवादले सङ्घीय शासन प्रणालीको आधारमा राज्य सञ्चालन हुनु पर्ने कुरामा जोड दिएको छ । यस्तो व्यवस्थामा देशको विधायिकी, कार्यकारी र न्यायिक अधिकार संवैधानिक रूपमै सङ्घ र प्रदेश तथा विशेष संरचनाहरू (स्वायत्त क्षेत्र, संरक्षित क्षेत्र र गैर भौगोलिक विशेष क्षेत्र)मा बाँडफाँट गरिनु पर्दछ । यसलाई राजनीतिक भाषामा सार्वभौम सत्ता, राज्यशक्ति र शासनाधिकारको बाँडफाँट भनिन्छ । विशेष संरचनाहरू स्वायत्त प्रदेशभित्र फरक पहिचान भएका जाति वा समुदायको सघन बसोबास रहेको स्थानमा निर्माण हुने छन् । यस्ता विशेष संरचनाहरूमा सम्बन्धित समुदायलाई अग्राधिकारको व्यवस्था हुनु पर्दछ । स्थानीय निकायहरूलाई प्रदेश मातहत रहने गरी सङ्घीयताको तेसो तह बनाउनु पर्दछ । यो नै सङ्घीयताको स्वरूप निर्माण र शासनाधिकार बाँडफाँटको बैज्ञानिक

आधार हो । यस्तो व्यवस्थामा सबै तहमा एक आपसमा सहकार्यात्मक रूपमा कार्य सम्पादन गर्ने समानान्तर व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका हुने छन् । सबै तहले आआफ्नो क्षेत्राधिकारभित्र अन्तिम निर्णय गर्ने अधिकार राख्दछन् । यस्तो व्यवस्थामा सङ्घ, प्रदेश, विशेष संरचना र स्थानीय निकायको बिचमा स्पष्ट रूपले क्षेत्राधिकार बाँडफाँट गरिएको हुन्छ । त्यसरी नै संविधानमा स्पष्ट क्षेत्राधिकार नतोकिएका अवशिष्ट अधिकारहरू प्रदेशलाई दिइनु पर्दछ भने बहुमतका आधारमा आफ्ना अधिकार नखोसिउन भन्नाका लागि अल्पसङ्ख्यक समुदायहरूलाई निषेधाधिकार (भिटोको अकिार) दिनु पर्दछ ।

५.२. **समाजवादी व्यवस्था**

समाजवाद उत्पादनका साधनहरूमा सामाजिकीकरण भएको व्यवस्था हो । हामीले यसलाई ज्ञान र विज्ञानका पछिल्ला अनुसन्धान र आविष्कार, विश्व इतिहासका अनुभवहरू र नेपाली समाजको ठोस परिस्थिति अनुरूप लागू गर्नु पर्दछ । राष्ट्रिय औद्योगिक पुँजीवादको जग निर्माण गर्दै त्यसमा टेकेर समाजवादमा पुग्ने रणनीतिक बाटो लिनु पर्दछ । समाजवाद माथिबाट लादिएको होइन तलबाटै उठेको, व्यक्तिको निजत्व कुण्ठित गर्ने होइन व्यक्तिको निजत्व प्रष्फुटित गर्ने तथा नोकरशाही प्रकृतिको होइन समावेशी र लोकतान्त्रिक प्रकृतिको हुनु पर्दछ । यसरी अगाडि बढ्दा स्वाभाबिक रूपले उत्पादनको प्रकृति र आधुनिक प्रविधिको प्रयोगले सामुहिकता जन्माइ नै रहन्छ । उत्पादनको सामाजिक चरित्र र त्यसको स्वामित्वमा रहेको केन्द्रीकृत चरित्रले गर्दा पुँजीवादमा समन्यायिक वितरण हुँदैन । पुँजीवादले जुन असमानता ल्याउँछ त्यो असमानताले संमाजमा द्वन्द्व पैदा गर्दछ । त्यसैले समाजवादको दिशामा जान उत्पादक शक्तिको विकास गर्ने हाम्रो अर्थ-राजनीतिक दिशा हुनु पर्दछ । हाम्रो कार्यदिशा मात्रात्मक पर्व्रिर्तनविना हठात पर्व्रिर्तन गर्ने हुनु हुँदैन । यस्तो व्यवस्थामा बजार र योजनाबद्ध विकासको समन्वय गरी पहिलो चरणमा समाजवाद उन्मुख, दोश्रो चरणमा समाजवादमा आधारित मिश्रित अर्थतन्त्र र तेश्रो चरणमा समाजवादी अर्थतन्त्र विकास गर्ने नीति लिनु पर्दछ । समाजवादी समाजमा पनि विभिन्न वर्गहरू हुन्छन् र तिनीहरूबिच एक्तव र सङ्घर्ष जारी रहन्छ । तर तिनीहरूको सम्बन्ध पुँजीवादी व्यवस्थामा जस्तो शत्रुतापूर्ण हुँदैन । त्यहाँका जनताहरू एकाधिकारवादी तथा अल्पतन्त्रवादीहरूबाट मुक्त हुन्छन् । आर्थिक सङ्कट र सामाजिक विपत्तिहरूमा राज्यसत्ता तिनीहरूको साथमा हुन्छ । त्यसैले समाजवादी व्यवस्था भौतिक तथा सांस्कृतिक सभ्यताको हिसावले

संसारमा भएका सबै व्यवस्थाभन्दा समुन्नत व्यवस्था हो । यस्तो व्यवस्था स्थापित गर्न औद्योगिक, कृषि र सेवा लगायत सबै क्षेत्रका श्रमजीवीहरूको महत्त्वपूर्ण भूमिका हुनु पर्दछ ।

### ५.३. समावेशी लोकतन्त्र

लोकतन्त्र भनेको जनताले आफ्नो शासन आफै चलाउने प्रणाली हो । अर्को भाषामा भन्दा सम्पूर्ण जनताको समान अधिकार भएको तन्त्र नै लोकतन्त्र हो । लोकतन्त्रमा सामूहिक निर्णयको आधारमा सार्वजनिक नियन्त्रण र कार्यान्वयनमा समानता हुनु पर्दछ । यस्तो प्रकृतिको लोकतन्त्रको सर्वोच्च रूप गणतन्त्र हो, जहाँ सबैको समान अधिकार हुन्छ । वहुराष्ट्रिय देशमा एकल जातीय नेतृत्व र बर्चस्व नहोस भन्नाका लागि लोकतन्त्र समावेशी हुनु पर्दछ । प्रतिनिधिमूलक बहुमतीय लोकतन्त्रको अभ्यासमा विभिन्न जाति/राष्ट्रका जनताको प्रत्यक्ष सहभागिताको कडी टुट्न गयो । त्यसकारण विभिन्न राष्ट्रियताका जनताको प्रत्यक्ष सहभागिता हुने विधि सुरक्षित गर्नका लागि समावेशी लोकतन्त्रको आवश्यकता छ । समावेशी लोकतन्त्र भनेको सबै वर्ग, जाति, भाषा, धर्म, संस्कृतिका समुदायहरूलाई राजनीतिको मूल प्रवाहमा समावेश गर्ने लोकतान्त्रिक अवधारणा हो । नेपालको सन्दर्भमा यो समाजवादी लोकतन्त्रको विशिष्ट रूप हुने छ । यस्तो लोकतन्त्रमा बहुमत समुदायको मात्र नभएर अल्पमत, अल्पसङ्ख्यक, लोपोन्मुख र सीमान्तकृत समुदायहरूलाई समेत समावेश र प्रतिनिधित्व गराइन्छ । तसर्थ राज्यको राजकीय तथा सार्वजनिक मामलामा हिस्सेदार बन्न नपाएका वा नसकेका सम्पूर्ण समुदायहरूलाई नीति निर्माण र कार्यान्वयनमा सहभागिता तथा प्रतिनिधित्वको माध्यमबाट समान अधिकार दिनु समावशी लोकतन्त्र हो । समावेशी लोकतन्त्रमा जनताको सर्वोच्चता, बहुलतायुक्त खुल्ला समाज, वालिग मताधिकार, आवधिक निर्वाचन, प्रतिस्पर्धात्मक बहुदलीय व्यवस्था, समानुपातिक निर्वाचन प्रणाली, संवैधानिक तथा कानुनी राज्य, मौलिक एवम् मानव अधिकार, शक्ति पृथकीकरण, स्वतन्त्र न्याय पालिका, प्रेस स्वतन्त्रता, आत्म निर्णयको अधिकार जस्ता लोकतन्त्रका साश्वत मूल्य र मान्यताहरू सबै आत्मसात गर्नु पर्दछ ।

### ५.४. जातीय/राष्ट्रिय पहिचान

जातीय/राष्ट्रिय पहिचान भन्नाले त्यस्तो पहिचान हो, जुन कुनै पनि व्यक्तिले जन्मसँगै बोकेर आएको हुन्छ । जाति/राष्ट्रलाई अङ्ग्रेजीमा नेसन भनिन्छ जसको उत्पति ल्याटिन भाषाको नेसियो (Natio) शव्दबाट भएको हो ।

यसको अर्थ जन्म वा जातिको बन्धनबाट बाँधिएको जन समुदाय हो । कुनै पनि जातिको पहिचान त्यस जातिको भाषा, संस्कृति, ऐतिहासिक भूगोल र सभ्यताले निरूपण गर्दछ । एउटा खास भौगोलिक क्षेत्रमा बसोवास गर्ने, एउटै खालको आर्थिक जीवन विताउने, एउटै भाषा तथा सामुदायिक स्वभावका गुणहरू तिनीहरूको जातीय/राष्ट्रिय स्वभावको रूपमा प्रकट हुन्छन् । यस दृष्टिले हेर्दा नेपालमा विभिन्न आदिवासी जनजातिहरू, मधेसी, थारू, खस, आर्य, शिल्पी, मुस्लिम आदिको पहिचान जातीय/राष्ट्रिय पहिचान हो । तिनीहरू सबै नेपालका राष्ट्रियताहरू हुन् । त्यस्तो समुदाय जसको आफ्नो अलग ऐतिहासिक मानव भूगोल, साझा भाषा, साझा संस्कृति, साझा आर्थिक जीवन र साझा मनोभावना छ, तिनीहरू सबै नेपालका सन्दर्भमा अलग राष्ट्रियता हो । हामीले पहिचान सहितको सङ्घीयता भनी रहँदा नेपालमा ती सबै समुदायहरूको पहिचान सहितको प्रदेश वा बिशेष संरचना निर्माणको कुरा गरेका छौं । तर नेपालका शासक वर्गले राजा महाराजाहरूले कोरेका भूगोलको पहिचानलाई जोड दिँदै आएका छन् । वास्तवमा सङ्घीय व्यवस्थामा साझेदारी हिमाल, पहाड, नदीनाला वा मठ मन्दीरको बिचमा नभई ऐतिहासिक मानव समूहहरूको बिचमा हुने कुरा हो । त्यसैले हामीले ऐतिहासिक सभ्यताले निर्माण गरेको मानव भूगोललाई आधार वनाई जातीय/राष्ट्रिय पहिचानको आधारमा सङ्घीय राज्य निर्माण हुनु पर्ने कुरामा जोड दिएका छौं । संसारभरि नै सङ्घीयताको स्वरूप यसरी नै निर्माण गर्ने गरिएको छ ।

### ५.५. समानुपातिक समावेशीकरण

समानुपातिक समावेशीकरण भनेको सबै वर्ग, जाति, भाषा, धर्म, संस्कृतिका समुदायहरूलाई राज्य व्यवस्थामा जातीय जनसङ्ख्याको अनुपातमा प्रतिनिधित्व गराउने लोकतान्त्रिक अवधारणा हो । यस्तो लोकतन्त्रमा निश्चित जनसङ्ख्याको आधार पुग्ने समुदायलाई समानुपातिक र न्युन जनसङ्ख्या भएका अल्पसङ्ख्यक, लोपोन्मुख र सीमान्तकृत समुदायहरूलाई समावेशी प्रतिनिधित्वको व्यवस्था गरिएको हुन्छ । तसर्थ राज्यको राजकीय तथा सार्वजनिक मामलामा सम्पूर्ण समुदायहरूलाई नीति निर्माण र कार्यान्वयनमा समानुपातिक प्रतिनिधित्व तथा सहभागिताको माध्यमबाट समान अधिकार दिनु समानुपातिक समावशीकर ण हो । सङ्घीय समाजवादी व्यवस्थामा सङ्घ, प्रदेश लगायत सम्पूर्ण संरचना लोकतान्त्रिक, विभेद रहित मात्र होइन जातीय जनसङ्ख्याको आधारमा राज्यका सबै अङ्गहरूमा समानुपातिक

समावेशी हुनु पर्दछ । विगतको विभेदकारी राज्यसत्ताद्वारा विभिन्न आधारमा महिला, आदिवासी जनजाति, मधेसी, थारू, शिल्पी, मुस्लिम आदि समुदायलाई पछाडि पार्ने कार्य गऱ्यो । खस र आर्य समुदायबिच पनि लामो समयसम्म खस पहिचानलाई पछाडी पारे । अतः राज्यसत्ताद्वारा गरिएका ती सबै प्रकारका विभेद र अन्यायको क्षतिपूर्ति स्वरूप यसरी पछाडि पारिएका समुदायलाई समान स्तरसम्म पुऱ्याउने सामुहिक समावेशीको विशेष नीति अपनाइनु पर्दछ । व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाका साथै नीति निर्माणको विभिन्न तहमा देशका सबै समुदायलाई समानुपातिक प्रतिनिधित्वको व्यवस्था गर्नु पर्दछ । समानुपातिक समावेशीबाट नसमेटिएका अल्पसङ्ख्यकहरूको अधिकार सुनिश्चित गर्न राज्यका विभिन्न अङ्गमा आरक्षण र कोटा प्रणालीको माध्यमले समावेशी बनाइने छ ।

### ५.६. स्वशासन र स्वायत्तता

सङ्घीय समाजवादी व्यवस्थामा केन्द्रमा साझा शासन मात्र होइन प्रदेश तथा स्थानीय तहहरूमा स्वशासनको व्यवस्था पनि हुनु पर्दछ । स्वशासन र स्वायत्तता अन्तर्सम्बन्धित विषय हो । स्वशासन भनेको आफ्नो लागि आफैले शासन गर्ने वा सरकार सञ्चालन गर्ने अधिकार हो भने स्वायत्तता भनेको राजकीय तथा सार्वजनिक मामलाहरूमा बाह्य नियन्त्रण वा हस्तक्षेपबिना आफूसँग सम्बन्धित विषयहरूमा आफैले निर्णय गर्ने र कार्यान्वयन गर्ने अधिकार हो । यसका लागि आफ्नो अलग संरचना आवश्यक पर्दछ । त्यस्तो संरचनालाई स्वायत्त राज्य/प्रदेश, क्षेत्र, समुदाय आदि भन्ने चलन छ । यस्ता संरचनाहरूलाई आफ्नो आधारभूत कानुन आफै बनाउने, संशोधन गर्ने, खारेज गर्ने, त्यसलाई आफ्नो क्षेत्राधिकारभित्र कार्यान्वयन गर्ने, मानवीय तथा प्राकृतिक स्रोत साधनहरू परिचालन गर्ने, विकास निर्माण गर्ने लगायतका अधिकारहरू हुन्छ । संयुक्त राष्ट्रसङ्घले यसलाई आत्म निर्णयको अधिकारको ठोस रूप मानेको छ । आत्म निर्णयको अधिकार बिना कुनै पनि स्वायत्त अङ्गहरूले राजनीतिक, आर्थिक, सामाजिक र साँस्कृतिक विकास गर्न सक्दैन । संयुक्त राष्ट्रसङ्घले आत्म निर्णयको अधिकार अन्तर्गत आफ्नो राजनीतिक पद्दति निर्धारण गर्ने र आर्थिक, सामाजिक, धार्मिक, सांस्कृतिक, भाषिक, शैक्षिक, प्रशासनिक, न्यायिक साथै विकास निर्माण लगायत सबै विषयमा स्वशासन र स्वायत्तताको अधिकार हुनु पर्ने कुरा उल्लेख गरेको छ । यस नीति अनुसार सङ्घीय समाजवादी व्यवस्थामा स्वायत्त प्रदेश र विशेष संरचनाहरू सबै संविधान

प्रदत्त अधिकार प्रयोग गर्ने स्वायत्त समुदायको रूपमा रहने छन् । आदिवासी जनजातिको अधिकार सम्बन्धी संयुक्त राष्ट्र सङ्घीय घोषणा पत्र-२००७, अन्तर्राष्ट्रिय अनुबन्धहरू र आइएलओ महासन्धि १६९ लागू गरिने छ ।

**५.७. साँस्कृतिक बहुलता**

साँस्कृतिक बहुलता भनेको बहुसंस्कृतिवादको मान्यता अनुरूप जातीय, भाषिक, धार्मिक तथा साँस्कृतिक विविधतालाई सम्बोधन गरी उत्पीडित तथा अल्पसङ्ख्यक समुदायहरूलाई राजकीय तथा सार्वजनिक मामलाहरूमा समान अधिकार प्रदान गर्नु हो । यस नीतिले देशको विविधतामा एक्ता र सहअस्तित्व कायम गर्ने छ । एकल जातीय एकाधिकार र विशेषाधिकार अन्त्य गर्नु साँस्कृतिक वहुलताको मुख्य लक्ष्य हो । सङ्घीय समाजवादी व्यवस्था बहुसाँस्कृतिक राज्य हो । यस व्यवस्थामा देशभित्रका सांस्कृतिक विविधतालाई समाजवादी साँस्कृतिक चेतना अनुरुप रूपान्तरण र विकास गरिने छ । यस व्यवस्थामा सबैको भाषा सबैको भेष बहु संस्कृति एक देशको नीति लिइने छ । वहुधार्मिक मुलुक भएकाले प्रत्येक नागरिकलाई धर्म मान्ने वा नमान्ने स्वतन्त्रता हुने छ । तर राज्य धर्म निरपेक्ष हुनु पर्दछ । त्यसरी नै राज्यका सबै अङ्ग, तह र निकायका सरकारी काम काजमा बहुभाषिक नीति लागू गर्नु पर्दछ । राज्यले प्रयोग गर्ने भाषाहरूलाई संविधानमा सूचीकृत गर्नु पर्दछ । देशका सम्पूर्ण नागरिकहरूले देशभित्रका कुनै दुई भाषा तथा अन्तर्राष्ट्रिय क्षेत्रमा प्रतिस्पर्धात्मक क्षमता वृद्धिका लागि थप एक अन्तर्राष्ट्रिय भाषा समेत गरी सामान्यतः तिन भाषा सिक्ने व्यवस्था गरिनु पर्दछ । मातृभाषामा शिक्षाको ग्यारेण्टी गरिनु पर्दछ । सङ्घीय सरकारले देशमा देशको उत्पादकत्व वृद्धिका लागि सरकारले खासखास राष्ट्रिय पर्वहरूमा मात्र सार्वजनिक विदा दिने व्यवस्था गरी चाड पर्वहरूका लागि एकमुष्ट विदा छुट्याउने र सबै समुदायहरूले आ–आफ्नो चाड पर्वहरूमा विदा लिन पाउने व्यवस्था गर्नु पर्दछ ।

**५.८. लोक कल्याणकारी राज्य र सामाजिक न्याय**

लोक कल्याणकारी राज्य भनेको त्यस्तो राज्य व्यवस्था हो जहाँ जनताको सामाजिक–आर्थिक कल्याणका लागि राज्यले महत्त्वपूर्ण भूमिका निभाएको हुन्छ । लोक कल्याणकारी राज्यमा नागरिकहरूका बिच अवसरको समानता, धन सम्पत्तिको समन्यायिक वितरण तथा जीवनको न्यूनतम आवश्यकता आफै पुरा गर्न नसक्ने वाल वालिका, अशक्त, असहाय तथा जेष्ठ नागरिकहरूका लागि राज्यले सामाजिक सुरक्षा प्रदान गर्दछ ।

जबसम्म गाँस, वास र कपासको भय तथा शोषण, उत्पीडन र अत्याचारबाट देशका नागरिकहरू मुक्त हुँदैनन् तबसम्म राजनीतिक स्वतन्त्रता अधुरो नै हुन्छ । सङ्घीय समाजवादी व्यवस्था त्यस्तो लोक कल्याणकारी व्यवस्था हो जहाँ उत्पादनको मुख्य उद्देश्य सामाजिक हित हुन्छ । श्रमजीवीहरू पुँजीवादी शोषणबाट मुक्त हुन्छन् । उत्पीडित समुदायहरू असमानता, विभेद तथा अन्यायबाट मुक्त हुन्छन । राज्य सामाजिक न्यायको यन्त्र वनेको हुन्छ । तिनीहरूको कल्याणका लागि स्वास्थ्य वीमा, सेवा निवृत्त वीमा, वाल वालिकाका लागि भरण पोषण र शिक्षा वीमा, वेराजगारका लागि वेरोजगाार वीमा जस्ता लोक कल्याणकारी व्यवस्था गरेको हुन्छ । त्यसरी नै वृद्ध, अशक्त, असहायहरूको संरक्षणको दायित्व पनि राज्यले नै बहन गर्दछ । समाजवादी समाजमा शोषण विरूद्धको भौतिक तथा सामाजिक चेतनाका कारण वर्गहरूबिचको सम्बन्ध मित्रतापूर्ण र सहयोगात्मक हुन्छ । त्यहाँको राज्यले सम्पतिको सीमा तथा पारिवारिक आयमा प्रगतिशील कर प्रणाली लागू गरेर जनताहरूको आर्थिक असमानतालाई दुर गर्दछ । राज्यले बढी कर तिर्नेहरूको योग्यता र क्षमताको कदर गरेको हुन्छ । समाजवादी व्यवस्थाको अर्थ-राजनीतिक दिशा लोक कल्याणकारी राज्य सृजना गर्ने भएकाले शिक्षा, स्वास्थ्य, रोजगार, आवास, खाद्य सम्प्रभुता र सामाजिक सुरक्षा जस्तो विषयलाई आधारभूत मानव अधिकारको रूपमा प्रत्याभूति गरिनु पर्दछ ।

**५.९.बहुलतायुक्त राष्ट्रवाद र राष्ट्रिय एक्ता**

बहुलतायुक्त राष्ट्रवाद भनेको देशभित्रका विभिन्न राष्ट्रियताहरूको पहिचान र सहअस्तित्वलाई प्रवर्द्धन गर्ने अवधारणा हो । नेपालमा सिङ्गो देशलाई एकल जातीय समाज जस्तो ठान्ने गलत दुष्टिकोण रहँदै आएको छ । सङ्घीय व्यवस्था भएका बहुराष्ट्रिय मुलकहरूमा राज्यभित्र राज्य र राष्ट्रभित्र राष्ट्रको मान्यतालाई आत्मसात गरेको छ । यस मान्यता अनुसार सङ्घ र प्रदेश दुवैमा विधायिकी, कार्यकारी र न्यायिक अधिकार प्राप्त राज्यका अङ्गहरू हुन्छ भने राष्ट्रभित्र राष्ट्रको मान्यताले साझा ऐतिहासिक भूमि, साझा भाषा, साझा संस्कृति, साझा आर्थिक जीवन र साझा मनोभावना भएका समुदायहरूको स्वशासनको अधिकारलाई प्रवर्द्धन गर्दछ । ती सबै समुदायहरूको आफ्नो राष्ट्रियता हुन्छ । ती राष्ट्रियताहरूको एक्ता नै नेपालको राष्ट्रिय एक्ता हो । तर नेपालमा राष्ट्रियतालाई एकाङ्गी रूपमा देशको राष्ट्रिय स्वाधिनता र वाह्य हस्तक्षेपसँग जोड्ने गरेका छन् । यहाँ २४८ वर्षदेखि एउटा समुदाय शासक र अरू शासित रहँदै आएको छ । तिनीहरूले आफ्नो

नश्लीय राष्ट्रवादलाई नै देशको राष्ट्रवाद ठान्ने गल्ती गरेका छन् । यो अत्यन्त हानिकारक र विभाजनकारी विचार हो । त्यसैले सङ्घीय समाजवादी व्यवस्थामा सबै जातिको साझेदारीमा आधारित वहुलतायुक्त राष्ट्रवादको विकास गरिने छ । यसले देशभित्र लामो समयदेखि विद्यमान उच्च जातीय अहङ्कारवादको अन्त्य तथा उत्पीडित राष्ट्रियताहरूलाई आन्तरिक उपनिबेशबाट मुक्त गरी बहुराष्ट्रिय सङ्घीय राज्य स्थापना गर्ने छ ।

उपरोक्त विशेषताहरू भएको नेपाली क्रान्तिको सिद्धान्त तथा त्यसको मार्ग दर्शनमा गरिने क्रान्ति र विकास निर्माणको संयोजन नै सङ्घीय समाजवाद हो । पार्टी जीवनको गतिशीलतासँगै नेपाली क्रान्तिको मार्ग दर्शक सिद्धान्त र सङ्गठनात्मक सिद्धान्त पनि समृद्ध हुँदै जाने छ ।

## ६. नेपालका राजनीतिक शक्तिहरु र तिनीहरुका प्रवृत्तिहरू

नेपाली समाज यतिवेला तीव्र ध्रुविकरणको दिशामा छ । प्रतिगामी संविधान जारी भएपछि मुलुक मुलतः दुई कित्तामा विभाजित छन् । त्यसभित्र पनि विभिन्न प्रवृत्तिहरू रहेका छन् । संविधान सभा मुलुकको रूपान्तरणका लागि एउटा अवसर थियो तर नेपालका पुनर्उत्थावादी तथा यथास्थितिवादी शक्तिहरूको गलत नीतिले संविधान सभा प्रतिक्रान्तिको साधन बन्न गयो । हामीले त्यसको गंभीरता पूर्वक विश्लेषण गर्नु पर्दछ । वर्तमान नेपालको राजनीतिक शक्तिहरूको चरित्र हेर्दा यहाँको राजनीतिक दलहरूको चरित्र प्रत्येक राजनीतिक मोडहरूमा परिवर्तन हुने गरेको छ । अहिलेको राजनीतिक प्रवृत्तिको आधारमा तिनीहरूको विश्लेषण यसप्रकार गर्न सकिन्छ -

### ६.१. पुनर्उत्थानवादी/प्रतिगामी शक्ति

मुलुकलाई पछाडी धकेल्न चाहने शक्ति पुनर्उत्थानवादी/प्रतिगामी शक्ति हो । नेपालमा रहेका वर्तमान राजनीतिक शक्तिहरूमा राष्ट्रिय प्रजातन्त्र पार्टी, नेपाल सैद्धान्तिक रूपमा अनुदारवादी तथा राजनीतिक रूपमा पुनर्उत्थावादी रहेको छ । राष्ट्रिय प्रजातन्त्र पार्टी सैद्धान्तिक रूपमा उदारवादी तथा राजनीतिक रूपमा प्रतिगामी रहेका छन् । यिनीहरू अहिले कमजोर अवस्थामा छन् ।

### ६.२. यथास्थितिवादी शक्ति

मुलुकलाई यथास्थितिमा राख्न चाहने वा अग्रगामी परिवर्तन नचाहने शक्ति यथास्थितिवादी शक्ति हो । नेपाली काङ्ग्रेस सैद्धान्तिक रूपमा लोकतान्त्रिक समाजवादी भए पनि राजनीतिक रूपमा यथास्थितिवादी रहेको छ । त्यसरी नै नेपाल कम्युनिष्ट पार्टी (एमाले) सैद्धान्तिक

रूपमा साम्यवादी भए पनि राजनीतिक रूपमा यथास्थितिवादी नै रहेको छ । यस प्रवृत्तिभित्र पनि मजफो (लोकतान्त्रिक), नेपाल कम्युनिष्ट पार्टी (माले) लगायत केही साना पार्टीहरू पनि पर्दछन् ।

### ६.३. सुधारवादी शक्ति

मुलुकमा आमूल परिवर्तन नचाहने तर सुधारवादी दृष्टिकोण राख्ने शक्ति सुधारवादी शक्ति हो । यस प्रवृत्तिभित्र नेकपा (माओवादी केन्द्र), नयाँ शक्ति पार्टी नेपाल, तमलोपा, सद्भावना लगायत केही आदिवासी जनजाति सम्बद्ध दलहरू पर्दछन् । नेकपा (माओवादी केन्द्र) सैद्धान्तिक रूपमा साम्यवादी भए पनि राजनीतिक रूपमा सुधारवादी रहेको छ । बाँकी धेरैजसो दलहरू सैद्धान्तिक रूपमा लोकतान्त्रिक समाजवादी र राजनीतिक रूपमा सुधारवादी रहेका छन् । यस प्रवृत्तिभित्र केही जातीय तथा क्षेत्रीय पार्टीहरू पनि पर्दछन् ।

### ६.४. उग्र वामपन्थी शक्ति

देशमा आमूल परिवर्तन नचाहने तर जडसूत्रवादी दृष्टिकोण राख्ने शक्ति उग्रवामपन्थी शक्ति हो । नेपाल कम्युनिष्ट पार्टी (माओवादी) र नेपाल कम्युनिष्ट पार्टी– माओवादी दुवै शक्ति यस प्रवृत्तिभित्र पर्दछन । यिनीहरू सैद्धान्तिक रूपमा नयाँ जनवादी क्रान्तिका पक्षधर र राजनीतिक रूपमा जडसूत्रवादी रहेका छन् ।

### ६.५. परिवर्तनकारी शक्ति

मुलुकमा आमूल परिवर्तन चाहने शक्ति परिवर्तनकारी शक्ति हो । यस विचारको मुख्य बाहक सङ्घीय समाजवादी फोरम नेपाल हो । माथि उल्लेख गरिएका धेरैजसो पार्टीहरू अहिलेको परिवर्तनलाई ठीक ढङ्गले नेतृत्व गर्न असफल भएका छन् । तसर्थ सङ्घीय समाजवादी फोरम, नेपालले अबको परिवर्तनलाई नेतृत्व गर्न आमुल परिवर्तनकारी शक्ति भएको हैसियतले वर्तमान राजनीतिक शक्ति सन्तुलनलाई विश्लेषण गरी बाटो तय गर्नु पर्दछ । परिवर्तनको पक्षमा भएका पहिचानवादी पार्टीहरू र आदिवासी जनजाति तथा मधेस केन्द्रित दलहरूसँग सहकार्य गर्दै पार्टीमा एकीकृत गर्नु पर्दछ । सबै परिवर्तनकारी शक्तिहरूलाई एउटै मोर्चामा गोलवन्द गर्दै सुधारवादी शक्तिहरूलाई पनि ठीक बाटोमा हिंडाउन सक्नु पर्दछ । अहिले हामीले अगाडि सारेको पहिचान सहितको सङ्घीयता प्राप्तिका लागि पुनर्उत्थानवादी शक्तिहरूसँग होशियार रहँदै चरम दक्षिणपन्थी र नश्लवादी पार्टीको रूपमा प्रतिगामी भूमिका खेलि रहेको नेकपा (एमाले) लगायतका यथास्थितिवादी शक्तिहरूमाथि प्रहारको निशाना केन्द्रित गर्नु पर्दछ ।

# खस जातिको चिनारी

राजु सुब्बा र टेकबहादुर थापा खस

आर्य भन्नाले पुरेत्याइँ गर्ने बाहुन बुझिन्छ र संस्कृत भाषामा ब्राम्हाण भनिन्छ । बाहुनको परिवारमा विधुवा वा कुमारी आमाबाट जन्मिएको सन्तानलाई जैसी भनिन्छ । त्यस्तै जनजाति, दलित र खस क्षेत्री महिलाबाट जन्मिएकालाई जात खसाई दिएर खत्री क्षेत्री बनाउने प्रचलन भेटिन्छ । खत्री क्षेत्रीका थरहरू बाहुन सँग मिल्ने अनगिन्ती रहेका हुन्छन् ।

खस क्षेत्री पश्चिम नेपालका खसान प्रदेशका आदिवासी जाति हुन् । यस जातिलाई झर्रो क्षेत्री र खसान इलाकामा पावई खस पनि भन्ने गरिन्छ । यद्यपि खस जाति नेपाल अधिराज्यभर छरिएर रहेका छन् । खस क्षेत्रीका थरहरूः कार्की, कटुवाल, खड्का, बस्नेत, थापा, राउत, रावत, विष्ट, सिंजापति, डाँगी, बुढाथोकी, खाती, कुवँर, बोगटी, धामी, बानियाँ, रायमाझी, अरिरि, कठायत, खडायत, खाँड, बम, महतारा, महरा, बुढा, सेन, बर्मा, शाही आदि पाइन्छन् । यी उल्लेखित थरीहरू बाहुन हुँदैन्न ।

खस र आर्य अर्थात बाहुन र क्षेत्री एकै हुन भन्ने भ्रमहरू हुन सक्छन् तर बाहुन र क्षेत्रीबीच कुटुम्बेरी चल्दैन । त्यसैबाट प्रष्ट हुन्छ यी दुई जाति ऐतिहासिक कालबाटै हरेक कोणमा बेग्लाबेग्लै हुन् । त्यस्तै खस क्षेत्री र खत्री क्षेत्रीबीचको भिन्नतालाई पनि बुझ्न अनिवार्य हुन्छ । 'क्षेत्री'लाई हिन्दीमा 'क्षत्री' लेख्ने गरिन्छ ।

**को हुन् खस ?**

पश्चिम नेपालको खसान क्षेत्रमा आदिम कालदेखि बसोबास गर्दै आएका प्रकृति पुजक आदिवासी खस हुन् । उनीहरू 'मष्टो' धर्म मान्दछन् । उनीहरूको पूजा गर्ने ठाउँलाई 'थान' भन्दछन् र उनीहरूको प्राचीन भाषा 'वाल्हीकी' हो । उनीहरूको लिपिलाई 'खरोष्टि' भनिन्छ । खस राजाको दरबार जुम्लाको सिंजामा थियो । दक्षिण उत्तरप्रदेशको कन्नौजबाट आएका द्वय



कान्यकुब्ज र मैथिली बाहुनहरूले खसहरूलाई हिन्दुकृत गरेका हुन । खसहरूले सुँगुर खाने गरेको इतिहास पाइन्छ । खसहरू हिन्दु नभएकोले वर्णाश्रम व्यवस्था मान्दैनन् । तर, जनै लगाई दिएर हिन्दुकरणमा परेसँगै क्षेत्री पदवी अन्ततः जातको रूपमा स्थापित हुन पुगेको हो । घरज्वाइँ बस्ने, जेठाँसले अलि बढी अंश पाउने प्रथा, मष्टोलाई बलि दिने देवाली पूजा, गोठपूजा, माघी मनाउने र टेकुवा वा नाठोको चलन खसका मौलिक संस्कृति हुन् ।

खस (क्षेत्री) जाति अहिले पनि नेपालको माथिल्लो निकायमा अत्यन्तै न्यून छन् । खस (क्षेत्री)लाई नेपालका नयाँ जनजाति भन्ने गरिन्छ । बाहुनसँग रङरूप धेरै मिल्नाले जनजाति तथा मधेसीहरू आफूलाई शोषण गर्ने बाहुनसँगै क्षेत्रीलाई पनि जोडेर गाली गर्ने गर्छन् । वास्तवमा बाहुनबाट सबैभन्दा धेरै खस क्षेत्री नै शोषित छन् । १. आफ्नो स्थापित थरको नाम नै जात खसाइएको नाम 'खत्री, क्षेत्री' मिसाइदिई क्षेत्री जाति सबै दोस्रो दर्जाका हुन् भन्ने भ्रम छरी जातीय अन्यायमा पारियो । २. खस (क्षेत्री)को जनसङ्ख्या लगभग १८ % र आर्य (बाहुन)को जनसङ्ख्या १२ % जोडेर राज्यवाट लिने अवसर र सुविधामा ३० % प्रतिशत लिने र त्यसमा सबैजसो बाहुनले मात्र उपभोग गरी खस (क्षेत्री)लाई पूर्ण शोषण गरेका छन् । त्यसै कारण संवैधानिक व्यवस्थामा पनि 'खस आर्य' भनिएकोमा खस क्षेत्रीको असहमति र आपत्ति हो । खस र आर्य प्राचीन सभ्यता देखि नै विल्कुल भिन्नभिन्नै हुन् ।

पहिला भनै थोरै जनसङ्ख्या रहेका बाहुन र त्यसमा पनि एकाधले मात्र अन्य जातिको विवाह गरी 'खत्री, क्षेत्री' बनेका कति होलान् अनुमान गर्न सकिन्छ । त्यसैले पश्चिमदेखि पूर्वसम्म बसोबास गरेको पाइने सबैभन्दा ठूलो जनसङ्ख्या भएका खस क्षेत्रीको सच्चा इतिहास र हैसियत खोज्न 'खस क्षत्री एक्ता समाज' क्रियाशील भएको देखिन्छ । क्षेत्री समुदायभित्रै यो चेतना छर्ने अभियानको क्रममा हाल ५ वटा भन्दा बढी 'थान' निर्माण भइरहेको कुरा पनि आएको छ । अन्य जातिहरू शोषित भनी घोषित छन् र सरकारबाट विशेष व्यवस्था छ । तर, लामो समयदेखि हरेक हिसाबमा शोषित ( धार्मिक, सांस्कृतिक, राजनैतिक, जातिगत र भौगोलिक हेर्नुहोस्: कर्णालीको विकास) खस जाति अझै अघोषित छन् त्यसैले अदेखा चरम शोषण र अतिक्रमणमा छन् । विडम्बना केही खस युवाहरू आफै यसबारे अनविज्ञ देखिन्छन् । अब खस युवाहरू स्वयम् आफूमाथिको शोषण विरूद्धमा किन नउठ्ने ?

*स्रोतः (१) बराल, इन्द्रबहादुर, खस जातिको मौलिक पहिचान र आर्य सभ्यता, (फेसबुक पोष्ट facebook.com/thaha.rajesh/posts/1308712192504063 (1 Mar 16), (२) पश्चिमेसियामा कस अर्थात खस जातिको विवरण चर्चित ज्ञानकोष, पृ ९६८, १५औं संस्करण सन् १९७३ । (३) योगी नरहरिनाथ, इतिहास प्रकाश, अङ्क २, भाग १, (वि.सं. २०१३), पृ. १०९ र १४६ । (४) सिंजापति, विपुल, को हुन् खस ?, http://esamata.com/2015/history, (1 Mar 16)*




# स्थानीय तहको पुनर्संरचना र नामाङ्कनमा किन बेवास्ता ?



**विश्वासदीप तिगेला**

देश सबैभन्दा महत्वपूर्ण घडिमा छ । स्थानीय तहको पुनर्संरचना र नामाङ्कन सिफारिस लगभग सिद्धिएको छ । थपिएको डेढ हप्ता बाँकी छ । सिंहदरबारमा ९ महिना सङ्घीयतालाई दुलो पार्ने काम गरेका कमल थापा र चित्रबहादुर केसीले सङ्घीयतालाई इन्जिनबिनाको बस बनाएको छ । त्यसै डिजाइनमा स्थानीय

पुनर्संरचना गरिँदैछ । पहिचान र इतिहासको विरासत चाहनेहरू झनै बढ्दो छ तर स्थानीय तहको पुनर्संरचना र नामाकरण सिफारिसमा भूमिका खेलेको देखिँदैन । गजब के छ भने अब डेढ हप्तापछि स्थानीय तह पुनर्संरचना आयोगले सुझाव लिइसकेपछि पहिचानवादीहरू विरोध गर्नेछन् । राष्ट्रिय जनगणना बखत पनि यस्तै भएको थियो । कसरी गर्ने, कुनकुन ठाउँमा षड्यन्त्र हुन्छ, त्यसलाई रोक्न केके गर्न सकिन्छ ? तथ्याङ्क आइसकेपछि केके कुरामा असर हुन्छ ? पुनः त्यसलाई सुधार्न किन गाह्रो हुन्छ ? सरकारको नीतिमा विरोध भएपनि रचनात्मक तरिकाले चाहि सङ्घीयता दिने अनि टोल र बस्ती कुन वार्डमा र गाउँपालिकामा पार्ने काम सिंहदरबारले गर्दैछ । कस्तो गजब भने अर्थ मन्त्रालयले अर्थ विनियोजन पनि कसलाई उपचार कति, कसको विवाहमा कति खर्च दिने छुटयाउने गर्दछ । त्यस्तै देश सङ्घीयतामा गयो तर त्यसको ठीक उल्टो एकात्मकवादी पद्धति अपनाइदै छ ।

नेपाल सरकार (सिंहदरबार)ले अन्तरिम राज्य सरकार बनाएर । उक्त अन्तरिम सरकारले प्रदेश सरकारको चुनाव गराएर राज्य सरकार जनवैधानिक बनाउने र त्यो वैधानिक प्राप्त प्रदेश



**आदिवासी बस्तीमा परिवार नियोजनको कार्यक्रम प्रभावकारी ढङ्गमा लैजाने । जिविकोपार्जनको निम्ति मुग्लान पस्न पर्ने अवस्था सिर्जना गरिदिने तब जनसङ्ख्या कसरी बृद्धि हुन सक्ला ?**

विरोध, असहमतिसँगै पुनर्संरचना र नामाङ्कनलाई कसरी सही बाटोमा लैजान सकिन्छ ? लोकसम्मतिअनुसार पहिचान र समुदायलाई झल्काउने प्रकारको कसरी बनाउन सकिन्छ आदि विषयमा चिन्तनचाहिँ अहिलेको आवश्यकता हो । यो स्थानीय तहको पुनर्संरचना र नामाकरण राज्य पुनर्संरचनाको मेरूदण्ड पनि हो ।

गजब के छ भने पहिला विकेन्द्रीकरण थियो । विकास क्षेत्र, अञ्चल, जिल्ला, जिल्ला क्षेत्र, गाविस र वार्ड अहिले नाम सरकारले स्थानीय तहको पुनर्संरचना र सिमाङ्कन गर्नुपर्ने सजिलो र सही बाटो हो । प्रदेश सरकारको चुनाव गर्न किन सजिलो हो भने सिमाङ्कन गरिएका प्रदेशभित्रका सम्पूर्ण योग्य नागरिकले भोट गर्ने र मुख्यमन्त्री र मन्त्रीहरू निर्वाचित गर्ने । त्यसको निम्ति गाउँगाउँ टोलटोलको पुनर्संरचना र नामाङ्न गर्न पर्दैन । प्रदेशसभामा निर्वाचित वैध सरकार बनेपछि कति गाउँपालिका बनाउने, केके नामाङ्न गर्ने प्रदेशसभाले गर्ने हो ।

सिमान्तकृत भएका कलष्टरलाई

मूलधारमा ल्याउन सङ्घीयताको अवधारणा ल्याइएको थियो । अध्ययन अनुसन्धानबाट १४ वा १० प्रदेश हुँदा राज्यबाट पछाडि पारिएका जाति समुदाय सबैलाई समान हकअधिकार प्रदान गर्न सकिन्छ भन्ने देखायो । अब सङ्घीयता देश विकासको निम्ति, राष्ट्रिय एक्ताको निम्ति ओखती हुनेमा जनता आसवादी बने तर बिडम्बना ओखती होइन विषको रूपमा ७ प्रदेश ल्याइएको छ । यो ७ प्रदेश कार्यन्वयन भएको खण्डमा सिमान्तकृत समुदायहरू झनै भयावह अतिक्रमणमा पर्नेछन् र उनीहरू केही दशकमा लोपोउन्मुख हुने तथ्याङ्ले देखाउँछ । विश्व इतिहासमै आदिमकालदेखि एकै ठाउँमा बसोवास गर्दै आएका जातिहरू लोप भएर गएका इतिहास छन् । भनिन्छ जनसङ्ख्या ज्यामितिय हिसाबमा बढेर जान्छ तर त्यो राज्यको नीतिमा निर्भर रहन्छ । आदिवासी बस्तीमा परिवार नियोजनको कार्यक्रम प्रभावकारी ढङ्गमा लैजाने । जिविकोपार्जनको निम्ति मुग्लान पस्न पर्ने अवस्था सिर्जना गरिदिने तब जनसङ्ख्या कसरी बृद्धि हुन सक्ला ?

गत १ अगष्ट २०१६ का दिन ताइवानकी प्रधानमन्त्री तेसी लिङ वीनले त्यहाँका लोपोन्मुख आदिवासी १६ जातिहरूसँग सरकारको तर्फबाट माफ मागिन् । ४ सय वर्ष अगाडि चीन भूमिबाट ताइवान गएकाले त्यहाँका आदिवासीहरूलाई अतिक्रमण र विस्थापित गर्दै गएका थिए । कुनै बेला आदिवासी मात्र रहेको ताइवानमा अहिले आदिवासी सिर्फ २ प्रतिशत मात्र बाँकी छन् । आदिवासी जनजातिहरू सिद्धिदै जान्छन् भन्ने यो एउटा ज्वलन्त उदाहरण हो । त्यस्तै गरी सन् २००९ फेब्रुअरीमा अष्ट्रेलियाका प्रधानमन्त्री केभिन रूडले त्यहाँका आदिवासीहरूप्रति सरकारको तर्फबाट माफ मागेका थिए । हामीले राजनीतिक मूलधारमा आउन नदिएको कारण हरेक अवसरबाट बञ्चित गराई लोपोन्मुख बनाएकोमा अत्यन्तै भावुकतापूर्वक माफी मागेका थिए । अमेरिकाका रेड इन्डियन आदिवासीहरूको पनि अवस्था उस्तै देखिन्छ । सन् १४ औं शताब्दी अघि अर्थात युरोपियनहरूको आगमनअघि पुरै अमेरिका ढाकेका रेड इन्डियनहरू अहिले पश्चिम-उत्तरका सीमित राज्यहरूमा मात्र पाइन्छन् । आदिवासीहरू पतन हुँदै जान्छन् भन्ने तथ्यलाई ख्याल गर्दै सयुङ्क्त राष्ट्र सङ्घले ९ अगष्ट १९९४ देखि आदिवासी दशक मनायो र प्रत्येक वर्ष अगष्ट ९ लाई विश्वभरका आदिवासीहरूको अवस्थालाई अवलोकन गर्न विश्व आदिवासी दिवस मनाउँदै आएको छ ।

यी माथिका उदाहरण पर्याप्त छन् भने आफ्नै मुलुकका राउटेहरूलाई हेरौं । उनीहरूको जनसङ्ख्या किन ज्यामितिय

दरबाट बढेन ? किन आज एक डेढ सयको हाराहारीमा बाँकी रहे ? ६० वर्ष अघिका जमिनदार तराईका थारूहरू किन आज कमैया, कमलरी बनेका छन् ? प्रसस्त उदाहरणका लागि टाढा जाने पर्दैन । अमेरिकन एक शोधकर्ता लिओनेल कपलानले इलामको एक गाउँमा सन् १९६४ मा आएर त्यस गाउँका पूर्ण तथ्याङ्क लिएर अमेरिका फर्किए र पुनः २४ वर्षपछि आएर त्यस गाउँको तथ्याङ्क लिए । दुई चार घर भएका खत्री, आर्यनहरू बढेर ४/५ सय घर पुगेको र पुरै गाउँ ढाकेका लिम्बुहरू किपट गुमाएका कारण गरिब भई बसाइँ हिंडेका र परिवार नियोजनको आकर्षक योजनाको कारण नियोजन गर्नुले ह्वात्तै लिम्बुको सङ्ख्या घटेको उनले पत्ता लगाएको कुरा उनको पुस्तक 'पूर्वी नेपालमा लिम्बु जातिको किपट र सामाजिक फेरबदल'मा उल्लेख गरेका छन् । नेपालका आदिवासी जनजातिहरू प्रतिदिन राज्यबाट अघोषित अतिक्रमणमा छन् भन्ने त्यो अकाट्य प्रमाण हो । ६० वर्षमै जमिनदार थारूहरू कमैया कमलरी बन्ने अवस्थामा पुगे, राउटे र कुसुण्डाहरू हजारौंहजारबाट सयौंको सङ्ख्यामा झरे भने मानौं लिम्बुहरू मासिएर साढे ३ लाखबाट घटेर ३ सयको सङ्ख्यामा आइपुग्न अब कति वर्ष लाग्ला ?

राजनीति भनेको टाढा पुग्न हिंडेका बटुवाको निम्ति सिधा, सजिलो मूलबाटो हो । यो मूलबाटोमा हिंड्न नपाउने बटुवाको यात्रा कस्तो हुन्छ ? त्यही मूलबाटो अर्थात मूलधारमा नरहेकाहरूको आवाजलाई कुल्चने कामको तीब्रता स्थानीय तहको यो पुनर्संरचना र नामाङ्कन हो कि ? त्यसो भए सचेत नागरिकहरूको कर्तव्य केहो ? के मौन विरोध मात्र काफी छ ?

*biswasdip@ymail.com*

१८ अगष्ट २०१६, नरवुड गार्डेन

---

# युकेमा अग्रगामी विचार मन्थन गठन

गत २ नोभेम्बर २०१२ दिन लण्डन नर्थहल भिजेज हलमा एक भेला सम्पन्न भयो । उक्त भेलाले लोकप्रिय नेता अशोक राईको नेतृत्वमा नवगठित पार्टीमा प्रवेश गर्नको लागि अनौपचारिक बैठक बस्यो र युकेमा उक्त अग्रगामी विचार समूह निर्माणको लागि नेपाल आदिवासी जनजाति महासङ्घ युकेलाई आग्रह गर्ने सहमति भयो ।

अनौपचारिक भेलामा रामकाजी राई, भगवान चाम्लिङ, प्रेम राई, कृष्णकुमार राई, जितेन्द्र साम्पाङ, टिकाधन राई, नरेश काङमाङ राई, गोपालकृष्ण राई, धर्मराज गुरूङ, कृष्णबहादुर राई, रोमप्रसाद राई, उद्धिमबहादुर राई लगायतको उपस्थिती थियो । कार्यक्रमलाई टिकाधन (हँ छाङबुङ किरात)ले संयोजन तथा सञ्चालन गर्नुभएको थियो ।

# रसमुर शाखाको नयाँ नेतृत्व चयन



*गत ११ सेप्टेम्बर २०१६ का दिन युके केन्द्रीय वरिष्ठ उपाध्यक्ष जंग सुनुवार र भक्त दुराको सक्रियता तथा उपस्थिति रहेको एक भेलाले रसमुर शाखाको नयाँ नेतृत्व चयन गरेको छ । भेलाले अध्यक्षमा जयप्रकाश राई, उपाध्यक्षमा जनक सुनुवार, सचिवमा दुर्गा राई, कोषाध्यक्षमा सावित्री राई र सदस्यमा क्रमशः हिन्द लिम्बु, राम सुनुवार, तिलक राई, छत्र सुनुवार र गजेन्द्र राईलाई चयन गरेको छ ।*

# वर्किंक शाखाको जिम्मा रामबहादुरलाई

गत १० सेप्टेम्बर २०१६ का दिन केन्द्रीय वैकल्पिक सदस्य भगवान चाम्लिङ र युके राष्ट्रिय समिति सचिव जगत गुरूङको सक्रियतामा वर्किङ शाखा समिति गठन भएको छ । शाखाको अध्यक्ष रामबहादुर देउसाली राई रहेका छन् । समितिको उपाध्यक्षमा पूर्ण पुन, सचिव सरू चाम्लिङ, सहसचिव सुनिता गुरूङ, कोषाध्यक्षमा मणिकुमार राई, सहकोषाध्यक्षमा चुन थापा मगर, सदस्यहरूमा क्रमशः कृष्ण राई, दीपस राई, विकास राई, पुजान राई, बिगन राई चयन हुनुभएको छ ।

# यसो गरौँ साथी

भगवान चाम्लिङ

यसो गरौँ साथी !
मैले तिमीलाई धेरैपटक
सभ्य, शिष्ट र सुसंस्कृत भाषामा सम्झाएँ
आदर, सम्मान र सत्कार गरेँ
अनुनय, विनय गरी तिमीलाई भनेँ-
मेरो पनि यो देश हो भन्न पाऊँ
मेरो पनि थोरै आफ्नु पहिचान पाऊँ,
मेरो पनि भाषा बचाऊँ
मेरो पनि धर्म, संस्कार, संस्कृति
र सभ्यताहरू बचाऊँ
ती मर्न लागे साथी !
ती लोपोन्मुख भए साथी !
मैले यसो भनिरहँदा
तिमीले मलाई माग्ने मगन्ते देखेऊ
जोगी भिखारी सम्झेऊ ।
तिम्रो वृद्ध अहंकारले
मेरो आवाज सुन्न छाडेऊ
सायद, तिमीले श्रवणशक्ति गुमाएका छौ
अनि त तिमी बधिर छौ
तिम्रो अभिमानले मेरो बिन्ती देख्नै छाड्यो
सायद तिम्रो दिव्यचक्षु गुमिसकेको छ
अनि त तिमी दृष्टिहीन हौ

तिम्रा ज्ञानेन्द्रियहरू पूर्ण प्रभावित छन्
अनि त तिमीले मलाई मान्छेहरूबीचको
मान्छे सम्झेनौ

मलाई क्षमा गर
किनकि म तिमीलाई
अधिनायकवादीको संज्ञा दिँदैछु
एकाधिकारवादीको प्रवर्तक हौ भन्दैछु
तिमीलाई जातिवादको नाइके हौ भन्दैछु
तिमी साम्प्रदायिकवादीहरूको गुरू हौ भन्दैछु
एकात्मवादीहरूको जड हौ तिमी भन्दैछु
नातावाद, कृपावाद, फरियावाद
केके निकृष्ट, नीच कर्म छन्
ती सबैको सूत्रधार तिमी नै हौ भन्दैछु
तिमी यथास्थितिवादको पहरेदार हौ
प्रतिगामीप्रेमी छौ, तिमीजस्तो छौ
ठ्याक्कै त्यस्तै भन्दैछु तिमीलाई साथी !
म तथ्यहरूको आधारमा बोलिरहेछु
म दसीप्रमाण जुटाएर बोलिरहेछु
कुनै निराधार विषय छैन यहाँ
कुनै अवस्तुवादी मनोगत विषय छैन यहाँ
अनादर, निन्दा, पूर्वाग्रह पोख्ने कार्य हैन
फगत देखिएका कुराहरू लेखिएको छ
भोगिएका कुराहरू जोडिएको छ
मलाई क्षमा गर साथी
मैले तिमीलाई यसो भन्नै पर्छ
त्यसैले त भनिरहेछु, तिम्रो चिन्तनलाई
तिम्रो आचरण लाई, तिम्रो कृयाकलापलाई
तिम्रो एकात्मकवादी अधिनायकवादलाई
तिम्रो एकाधिकारवादी विशारदलाई ।

जातिवादी कुकर्मलाई

आफ्नो धार्मिक, अतिवादी मोहलाई
लालस, लिप्सा, कृपाको पराकाष्टलाई
पश्चगामी सामन्ती रोगलाई
यी सबैको योगफललाई नै
ब्राम्हणवाद भन्दैछु म
मैले यसो भन्नै पर्छ साथी
दुई सय चालीस वर्षदेखि आजसम्म मैले
तिम्रो ब्राम्हणवादी सिद्धान्तको चोट
अनवरत सहिरहेछु
मलाई ब्राम्हणवादी भन्नु
तिमीले बाध्य बनायौ
मलाई क्रान्तिको भावना
विस्फोट गर्न विवश बनायौ
मलाई विद्रोह गर्न बाध्य गरायौ
तिमी कुर्लिरहेछौ हिन्दुसापेक्ष राष्ट्र भनेर
सारा भूगोल नै हिन्दुको भूगोल भएपछि
म किरात वा बुद्धधर्मको
देश र माटो कहाँ छ साथी ?
धर्मको राष्ट्र हुँदैन
राष्ट्र मानव समाजको हुन्छ
तिमी अचाक्ली अधम छौ
तिमी अचाक्ली  व्यभिचार गर्छौ
तिमी जनविद्धेष फैलाउँछौ
यो कुविवेकले चल्दैन समाज अब
यो पुरातनवादी चेतनाले चल्दैन देश अब
यो विज्ञाको युग हो, समाज विज्ञानले चल्छ
राजनीतिक विज्ञान हो
विज्ञानबिनाको राजनीति अधुरो र अपुरो हुन्छ
यत्ति बुझिराख ! विकासमा तगारो हालेर
समृद जनता देख्न नचाहने
प्रतिगमनको बिउ छर्दै हिँड्ने तिमी

अराष्ट्रिय तत्व हौ
तिमी कुत्सित छौ भन्ने
जनताले ठ्याम्मै थाहा पाए
अनि त म पाखन्डी भन्दैछु तिमीलाई ।
मैले भन्नै पर्छ तिमीलाई
तिमी जस्तो छौ त्यस्तै भन्दैछु
मलाई माफ गर साथी
जनताले शहीद भएर ल्याएको
धर्मनिरपेक्ष, सङ्घीय लोकतान्त्रिक गणतन्त्र
तिम्रो पोल्टामा राखेर एकलौटी भोग गऱ्यौ
जनयुद्धमा सिन्दुर पुछिएर प्राप्त गरेका
सार्वभौम सम्पन्न अधिकारलाई
तिम्रै पैतृकसम्पति बनायौ
त्यसैले त तिमी भन्दैछौ
म यो दिन्नँ/म त्यो दिन्नँ
मानौँ, सारा तिम्रै निजी हो
तिम्रै खटनमा चल्छ
अनि त मैले भन्नै पर्छ,
तिमी कुठाराघातीका दिग्दर्शक हौ
तिमी आडम्बरी हौ, तिमी ढोँगी हौ
फेरि पनि मलाई माफ गर
मैले तिमीलाई भन्नै पर्छ
तिमी जस्तो छौ
केवल म त्यस्तै भन्दैछु
तिमी निच छौ, तिमी अधम छौ
यो जनताको आवाज हो
तिमी जस्तो छौ
यी अक्षरहरू विल्कुल त्यस्तै छन्
यी अक्षरहरूको कुनै दोष छैन ।

*१८ अक्टोबर २०१४, वोकिङ, बेलायत*

*नेपाली सङ्घीय समाज, युकेको ऐतिहासिक दोस्रो महाधिवेशन २५ सेप्टेम्बर २०१६ मा महासचिव विश्वासहाङ खिवाहाङद्धारा प्रस्तुत*

# साङ्गठानिक प्रतिवेदन तथा भावी कार्यदिशा

**अध्यक्षज्यू, प्रमुख अतिथिज्यू, प्रतिनिधि तथा पर्यवेक्षक एवम् उपस्थित जनसमुदाय**
नेपालको राजनैतिक परिस्थिति अत्यन्तै अस्वभाविक मोडमा पुगेको छ । संविधान सबै जाति, धर्म, वर्ग तथा समुदायको सहमतिको दस्तावेज हुनुपर्दथ्यो । संविधान बहुमत र अल्पमतबाट बन्ने बस्तु हुँदै होइन । बहुमतकै आधारमा बनाउने हो त अल्पसङ्ख्यक जातिको अधिकार सुनिश्चित कहीं पनि हुन सक्दैन र भएको छैन । तर विडम्बना गत २०७० को संविधानसभा निर्वाचनमा प्राविधिक संरचनाबाट आएका सभासदको सङ्ख्याकै आधारमा संविधानसभा कब्जामा लिई ३ पार्टी (काँग्रेस, एमाले र माओवादी केन्द्र) का ३ जनाले बालुवाटारमा बसेर बनाएको त्रुटिपूर्ण, षड्यन्त्रपूर्ण संविधान जारी गरे लगतै नेपालका शासकहरू विश्व सामु नाङ्गिए । आदिवासी, जनजाति एवम् सिमान्तकृतहरूको लागि थप हक अधिकारहरू व्यवस्था हुने आश गरिएको थियो तर त्यसको ठिक विपरित पहिल्यै व्यवस्था भएका हकअधिकारहरू समेत कटौती गरिए । सांस्कृतिक शोषण एवम् जातीय शोषणमा परेकाहरूलाई मुक्ति दिलाउनका लागि राज्यको संरचना सङ्घीयतामा लैजाने अचुक औषधिको रूपमा १४ वा १० प्रदेशको प्रस्ताव राज्य पुनर्संरचना तथा राज्य शक्तिको बाँडफाँड समिति (७ मङ्सिर २०६५) र राज्य पुनर्संरचना सुझाव आयोग (१२ चैत्र २०६८) को अध्ययनले ल्याइएको थियो । सिफारिस गरेको थियो तर विडम्बना शोषणमा परेका जातिहरूलाई मुक्ति होइन उल्टै शोषण र अतिक्रमण गरि केही वर्षभित्रै लोप गराउने विषको रूपमा ७ प्रदेशको खाका ल्याइयो ।

संविधान र सङ्घीय संरचना बनाउँदाको षड्यन्त्रलाई हतारहतार ढाकछोप गर्न, षड्यन्त्रैषड्यन्त्र व्यवस्था गरिएको संविधानलाई अस्वीकार गर्नेहरूको भयानक आन्दोलन हुने डरले जनताको चासो मोड्न भारतले नाकाबन्दी गऱ्यो भनी हल्ला फैलाइयो । सानै उमेरदेखि भारतको विरोध गर्नु महान राष्ट्रवादी हो भन्ने गलत अस्त्र प्रयोग गर्ने दुस्साहस भयो । कुनैपनि अवस्थामा भारतविरूद्ध यस्तोउस्तो भन्ने वित्तिकै जनताहरू

भारतको विरूद्धमा उत्रने गरी गरिएको लगानीलाई उपयोग गरियो । अमेरिकाको पूर्व राष्ट्रपति जर्ज डब्लु बुसले दोस्रो कार्यकाल चुनाव जित्न चुनाउको सँघारमा इराकमाथि भयानक युद्धको आभाष दिए र देश युद्धमा भएकोले सरकार अहिले फेर्न हुन्न भन्ने जनताहरूमा बोध भयो र आखिर चुनाउ बुसले नै जित्यो । अर्का राष्ट्रपति वाराक ओबामाले पनि दोस्रो कार्यकालको लागि भइरहेको चुनाबको बेला अफगानिस्तानको युद्धलाई चर्कायो र युद्धको बेला जनताले सरकार परिवर्तन गर्न चाहेन र उनैलाई जिताएको विश्वास गरिन्छ । शासकहरू जनताहरूलाई भुलाएर बेइमान गर्न सक्छन भन्ने उदाहरण यी हुन् । ऊ पारि चील आयो भनी वारि चोरी गरेझैँ बेइमान संविधान हतारहतार बनायो र जबरजस्त छलफलै नगरी जारी गऱ्यो । संसदमा छलफल नगरी जारी भएको संविधानलाई वैधानिक भन्न सकिन्छ ? त्यसैको विरूद्धमा मधेशी, थारू, लिम्बुवान तथा आदिवासी जनजातिहरूले महिनौमहिनासम्म आन्दोलनलाई जारी राखेका छन् । आन्दोलनको समय लम्बिदै जाँदा स्वतः आन्दोलन शिथिल बन्छ भन्ने सरकारको बुझाइको विपरित आन्दोलनले झनै स्थायीत्व प्राप्त गर्दै गयो र ३९ औं दिन सम्म खुल्लामञ्चमा अनशनको आन्दोलन सम्पन्न भयो ।

नदीमा पुल (सङ्घीयता) लगाएर पारि तर्ने सल्लाह भइरहेको छ तर काम चाहिं पुल बनाउँदा चाहिने तार चुडाल्ने काम भइरहेको छ । सङ्घीयतामा गइसकेको र सङ्घीय प्रदेश आफैले स्थानीय तहको पुनर्संरचना गर्नुपर्नेमा ठीक उल्टो काम काठमाडौं केन्द्र सरकारले स्थानीय तहको पुनर्संरचना सिफारिस लिइरहेको छ । अर्काको बाली लुटेजस्तो यो राजनैतिक लुट हो, झुठ हो । सङ्घीयताविरूद्धको अर्को बेइमानी कदम हो । यो तत्काल रोकिनु पर्दछ र प्रदेश सरकारले नै स्थानीय तहको पुनर्संरचना गर्नुपर्दछ ।

२ करोड ८१ लाख र ७४ हजार जनसङ्ख्या भएको मुलुकमा गत चुनाबमा जम्मा ९४ लाख ६३ हजारले मात्र मतदानमा भाग लिए र त्यसमध्ये पनि काँग्रेस, एमाले र एमाओवादीको कुल मतलाई जोड्ने हो भने लगभग ६० लाख ९७ हुन्छ । त्यही शक्तिले ७ प्रदेश ल्याएको हो । चुनाब बहिष्कार गर्ने नेकपा माओवादी (वैद्य), सङ्घीय लिम्बुवान पार्टी लगायत गरेर २ करोड २० लाख र ७७ हजार नेपाली यी तीन पार्टीका निर्णय विरूद्धमा छन् या केही खुलेका थिएनन् । कुल नेपाली जनतामध्ये (काँग्रेस, एमाले र माओवादी केन्द्रको) जम्मा २१% प्रतिशतको मात्र यो संविधानमा सहभागिता छ । के ७९% प्रतिशतको विरूद्ध केवल २१% प्रतिशतले जबरजस्त संविधान लागु गराउन सक्छ ? उनीहरूको दम्भ जस्तो ठूलो मत उनीहरूसँग छैन ।

सबै नेपालीको हक, अधिकार संविधानमा समेट्न संविधानको पूर्नलेखन वा संशोधन गर्न । षड्यन्त्रकारी ७ प्रदेशको सट्टामा कलस्टर मिल्ने प्रदेशहरू बनाउन भनी जारी रहेको आन्दोलनमा विदेशमा

बस्ने नेपालीहरूको पनि अहम् भूमिका रहँदै आएको छ । र, युकेमा रहेका हामी परिवर्तनकामी शक्ति अझ शसक्त अगाडि बढिरहेका छौं । सन् २२ डिसेम्बर २०१२ का दिन स्थापित नेपाली सङ्घीय समाज युकेले आफ्नो पहिलो महाधिवेशन २० सेप्टेम्बर २०१४ सम्पन्न गरेपश्चात अझ सशक्त र अझ संस्थागत ढङ्गबाट मुक्ति अभियानमा, न्याय, समानता कायम गरी नेपालको शान्ति र समृद्धिको अभिलाषालाई पूरा गर्न साथै युकेको अनुकुल रहनसहनमा टेवा पुर्‍याउन निम्न कुराहरू सुसम्पन्न भए :

**गतिविधि विवरण:**

(१) गत २ सेप्टेम्बर २०१६ का दिन लण्डन शाखाको दोस्रो अधिवेशन सम्पन्न भयो । अधिवेशनले पूर्ण लिम्बु फालेछ्वाको अध्यक्षतामा नयाँ नेतृत्व चयन । प्रवक्ता नरेश काङमाङ राईको उपस्थिती थियो ।

(२) गत २२ अगष्ट २०१६ का दिन केन्द्रीय महासचिव विश्वासहाङ खेवाहाङको पहल तथा उपस्थितिमा जयबहादुर तामाङको अध्यक्षतामा फोक्स्टोन शाखा गठन सम्पन्न ।

(३) गत १४ अगष्ट २०१६ का दिन केन्द्रीय महासचिव खेवाहाङको सक्रियता आसफोर्ड शाखाको अधिवेशन सम्पन्न । शाखा अध्यक्षमा विनोद सुब्बा चयन । पार्टी केन्द्रीय वैकल्पिक सदस्य भगवान चाम्लिङको पनि उपस्थिति थियो ।

(४) गत २४ जुन २०१६ का दिन सङ्घीय समाजवादी फोरम, नेपाल स्थापनाको प्रथम वार्षिक उत्सव लण्डनमा सम्पन्न भयो । केन्द्रीय सल्लाहकार लक्ष्मण तुलाचन र बृद्धा नेता तिलबहादुर गुरूङले केक काट्नु भयो । ससफो, नेपाल सन् २०१५ जुन १५ का दिन ३ पार्टी एकीकरण भई निर्माण भएको थियो ।

(५) नेपालमा जारी सङ्घीय गठबन्धनको आन्दोलनलाई सहयोग गर्न समाजले सञ्चालन गरेको आर्थिक सहयोग कार्यक्रमका संयोजक सचिव मिलन राईको सक्रियतामा उठेको रू १ लाख ७५ हजार रूपैयाँ गठबन्धनको लागि अध्यक्ष धर्मबहादुर तामाङको हातमा पठाउने गत १२ जुन २०१६ को साँझको टेलिकन्फिरेन्स बैठकले निर्णय गरयो । र, सोही मुताबिक हस्तान्तरण पनि भइसकेको छ ।

(६) नेपाली सङ्घीय समाज युकेको नेतृत्वमा गत १९ जुन २०१६ का दिन लण्डन टफाल्गार स्क्वायरमा भेला भई मार्च पास गर्दै युकेको पार्लियामेन्ट अगाडि नेपालमा जारी अनसन (२५ जेठ - ३१ असार २०७३) को १३ औं दिनमा नेपालका आदिवासी, जनजाति र मधेसीलाई सिध्याउने संविधान खारेज गर भन्ने प्ले कार्ड सहित ऐक्यबद्धता जनाउदै एकदिने अनसन सम्पन्न भयो ।

(७) गत १८ जनवरी २०१६ मा सम्पन्न बैठक र १८ अप्रिल २०१६ का दिन साँझ सम्पन्न टेलिकन्फिरेन्स बैठकले समाजका वरिष्ठ उपाध्यक्ष जंग सुनुवारको हातमा केन्द्रीय पार्टी कार्यालयको एक महिनाको भाडा रू १ लाख ५० हजार पठाउने निर्णय गरयो र सोही मुताविक

केन्द्रीय कार्यालयमै हस्तान्तरण कार्य सम्पन्न भयो ।

(८) गत ९ जनवरी २०१६ का दिन नेपाली सङ्घीय समाज युकेको वार्षिक साधारणसभा तथा खस समावेशी पार्टी र सङ्घीय समाजवादी पार्टी, नेपालको प्रवास अङ्गको रूपमा रहेको नेपाली सङ्घीय समाजबीच समायोजन भयो । केन्द्रीय सल्लाहकार लक्ष्मण तुलाचन र वैकल्पिक केन्द्रीय सदस्य पीजी शेर्पाको प्रमुख आतिथ्य र वैकल्पिक केन्द्रीय सदस्यद्वय भगवान चाम्लिङ र टेकबहादुर थापा राजेशको उपस्थिति थियो । खस समावेशी पार्टी नेपाल युके समितिको तर्फबाट उपाध्यक्षमा इन्द्र खस कार्की, सदस्यहरूमा नवीन थापा, विकेश बस्नेत, सूर्य कार्की र सल्लाहकारमा राजेन्द्र बस्नेतसहित समायोजन भयो । समायोजनपछि सङ्घीय समाजवादी फोरम, नेपालको प्रवास अङ्ग नेपाली सङ्घीय समाज बन्यो । यस समायोजनसँगै समाजको ३३ जना रहेको समिति र उपाध्यक्षहरू ६ कायम भएका छन् ।

(९) लण्डन, १६ डिसेम्बर २०१५ । नेपाल र ब्रिटिस सरकारबीच सम्बन्ध स्थापना भएको दुई सय वर्षगाँठका अवसरमा सहभागी हुन आएका उपप्रधान तथा परराष्ट्रमन्त्री कमल थापाको सङ्घीय समाजसहित मधेशी र जनजातिद्वारा चर्को विरोध भएको थियो । भव्य समारोहमा सबै विशिष्ट पाहुनाहरू मुख्यद्धारबाट छिरेपनि मन्त्री थापा प्लेकार्डसहित गेटैमा विरोध गरी बसेका मधेसी, आदिवासी जनजातिहरूको विरोध छल्न पछाडि बाटोबाट प्रवेश गर्न बाध्य भएका थिए । त्यस्तै गरी १७ डिसेम्बरका दिन भूतपूर्व गोर्खाहरूसँग गर्ने भनिएको अन्तरक्रियामा पनि विरोध जनाउन सङ्घीय समाजसहित मधेशी र जनजातिहरू पुगेका थिए जसको कारण कार्यक्रम रद्ध गर्न बाँध्य भएका थिए ।

(१०) गत ९ नोभेम्बर २०१५ का दिन नेपाली सङ्घीय समाज युकेको रिडिङ शाखाको प्रथम अधिवेशन सुसम्पन्न भयो र पुनः तिलबहादुर गुरूङ चयन हुनुभयो । सोही दिन वैकल्पिक केन्द्रीय सदस्य भगवान चाम्लिङ र युके अध्यक्ष धर्मबहादुर तामाङबाट प्रशिक्षण सम्पन्न भयो ।

(११) गत २ नोभेम्बर २०१५ बाट नेपाली सङ्घीय समाजका प्रवास समिति युके, बेल्जियम, हङकङ, कोरिया लगायतको सयुक्त लगानीमा पार्टीलाई सहयोग गर्नेगरी अनलाइन समाचारको वेभसाइट नयाँसमाचारडटकम सुरू गरेको छ । त्यसको लागि नेपाली सङ्घीय समाज युकेले रू १ लाख हस्तान्तरण गरयो ।

(१२) गत २० सेप्टेम्बर २०१५ का दिन सङ्घीय समाजको निर्णय र अगुवाईमा अन्य पहिचानवादीहरूसँग मिलेर नेपालको संविधानसभामा नयाँ संविधान जारी हुँदै गर्दा ठीक त्यही समयमा लण्डनको केन्द्रबिन्दु टाफल्गार स्क्वाएरमा भेला भई अस्वीकार गरेको सङ्केत स्वरूप संविधान जलाउने कार्य भयो । बेइमान संविधान स्वीकार्य छैन लेखिएका प्ले कार्डसहित प्रर्दशन भएको

थियो ।

(१३) गत १५ अगष्ट २०१५ सप्तरीको भारदहमा शान्तिपूर्ण विरोधमा उत्रिएका समाजवादी फोरमका राजीव राउत र राजीव झाको हत्याप्रति खेद व्यक्त गर्दै सोही दिन १ लाख १ हजार पीडित राउत र झाको निमित्त पठाइयो ।

(१४) गत २४ चैत्र २०७१ । पार्टीद्वारा घोषित ३ दिन बन्द हडतालको पहिलो दिन भोजपुरमा भएको प्रहरी दमनमा घाइते प्रतिमा राई लगायत पार्टीका नेता तथा कार्यकर्ताको उपचारका लागि रू १ लाख तत्कालै पठाइयो ।

(१५) गत ५ जुलाई २०१५ । सङ्घीय समाज युकेको वार्षिक भेटघाट तथा 'भुकम्प पीडित राहत च्यारिटी तथा भेटघाट' डिनर कार्यक्रम सम्पन्न भयो उक्त च्यारिटीबाट लगभग २ हजार २५ पाउण्ड सङ्कलन भयो । साथै, उक्त साँझ भर्खरै जारी संविधानलाई च्यातेर र जलाएर विरोध गरिएको थियो ।

(१६) गत १५ जुन २०१५ का दिन काठमाडौमा सङ्घीय समाजवादी पार्टी, नेपाल, मधेशी जनअधिकार फोरम र खस समावेशी पार्टी नेपालबीच एकीकरण भई सङ्घीय समाजवादी फोरम, नेपाल घोषणा । प्रवास अङ्गको नाम नेपाली सङ्घीय समाज नै रहने केन्द्रको सहमति भयो ।

(१७) गत १७ मे २०१५ का दिन नेपाली सङ्घीय समाज युकेको नर्थहल लण्डनमा सम्पन्न चौथो विस्तारित बैठकले भूकम्प पीडित राहत कोषको लागि ३ लाख तत्कालै नेपाल पठायो ।

(१८) गत ३ फेब्रुवरी २०१५ का दिन नेपाली राजदूतावास लण्डनमा युकेका पहिचानवादी सङ्घीय गठबन्धनले सहमतिमा संविधान निर्माण गर्नुपर्ने माग गर्दै ज्ञापनपत्र बुझायो । यसमा सङ्घीय समाजको मुख्य भूमिका रहयो ।

(१९) गत १८ जनवरी २०१५ का दिन नेपाली सङ्घीय समाज युकेको बैठकले नेपालको यो सङ्गीन घडीमा लण्डनबाट सञ्चालित बीबीसी नेपाली सेवाले सङ्घीयताविरूद्ध श्रृङ्खलाबद्ध दिँदै आएको समाचारप्रति खेद प्रस्ताव लिखित रूपमा पारित गर्‍यो ।

(२०) गत २३ नोभेम्बर २०१४ का दिन ससपा, नेपालको तेस्रो स्थापना दिवस सङ्घीय समाजले लण्डनमा भव्यतापूर्वक मनायो । पहिलो सभा लण्डन शाखा समितिको प्रथम महाधिवेशनको अध्यक्षता रत्न थापामगरले गर्नुभएको थियो । व्यवसायी कुवेर होडा, लोपसाङ, बोम प्रसाद राई, टेकबहादुर गुरूङ, अम्बरबहादुर थापा, जनक राई, ज्ञानबहादुर राई एमाले, एमाओवादी र काँग्रेस परित्याग गरी सङ्घीय समाजवादीमा प्रवेश गर्नुभयो ।

(२१) गत १ नोभेम्बर २०१४ का दिन नर्थहोलमा सङ्घीय समाजको प्रथम बैठकमा पूर्व नेतृत्वलाई हार्दिक विदाई र नवनिर्वाचित नेतृत्वमा जिम्मेवारी हस्तान्तर भयो । वरिष्ठ उपाध्यक्षमा जंग सुनुवारलाई चयन, तमु धिँ युकेका अध्यक्ष कमल गुरूङलाई सल्लाहकार र नरेश काङमाङ राईलाई प्रवक्तामा चयन साथै

रत्न थापामगरलाई केन्द्रीय सदस्यमा चयन गरियो । जातीय मोर्चा: ताम्सालिङ प्रदेश समिति युके संयोजकमा दावा स्याङ्बो, सहसयोजकमा सुशीला वाइबा, किरात खम्बुवान प्रदेश समिति युके संयोजक भानुभक्त राई, तमुवान प्रदेश समिति युके संयोजकमा कमल गुरूङलाई चयन गर्‍यो । पार्टी प्रशिक्षण विभाग संयोजक भगवान चाम्लिङ, सहसंयोजक प्रेमकुमार राई । आर्थिक विभाग संयोजक जंग सुनुवार र सहसंयोजकमा विमला कुमारी राई । पार्टी अनुसासन विभाग संयोजक राजेन्द्र खिम्दिङ र सहसंयोजक कमल गुरूङ । सङ्घीय युवा सङ्घ युके संयोजक मिलन राई । सङ्गठन विभाग संयोजक विश्वासहाङ खेवाहाङ र कमलप्रसाद राई । प्रचारप्रसार विभाग संयोजक देव गुरूङ र सहसंयोजकमा जानुका राई । समाजवादी महिला सङ्घ युकेका संयोजक बसुन्धरा याख्खा राई चयन हुनुभयो । अध्यक्ष, महासचिव र उपमहासचिव रहेको सचिवालयको जिम्मेवारी तोक्यो । भातृसङ्गठन सङ्घीय सांस्कृतिक महासङ्घ युकेको संयोजकमा किसन राई र सहसयोजकमा प्रकाश राई प्राणलाई चयन गरयो । थप सल्लाहकारहरूमा सिरी प्रसाद लिम्बु, भक्तबहादुर गुरूङ, भक्त दुरा, भानुभक्त राई, मेजर भूपजित राई, कृष्णबहादुर राई, श्रीमती क्षेत्रकला राई, जीवन राई, खगेन्द्र याख्खा, ताराबहादुर गुरूङ, दिलिप महासेठलाई चयन गर्‍यो भने बुद्धिजीवी समितिमा बीके पाण्डे, एकेन्द्र गुरूङ, केदार सुनुवार, रमेश घिमिरे र शिवधन राईलाई चयन गरेको छ ।

(२२) गत १ नोभेम्बर २०१४ का दिन सङ्घीय समाज युकेले नेपालको संविधानसभाका माननीय ६०१ सभासदहरू सबैलाई सङ्घीयता सम्बन्धि को दस्तावेज रहेको 'सङ्घीय गणतन्त्र नेपाल: समावेशी लोकतन्त्रको उच्चतम रूप' नामक पुस्तक उपाध्यक्ष देव गुरूङ र रत्न थापा मगरको सक्रियतामा दसैँ-तिहार २०७१ को शुभ कामनासहित सिंहदरबारमा उपहार स्वरूप हस्तान्तरण गरियो ।

(२३) गत ५ अक्टोबर २०१४, नेपाली सङ्घीय समाज रिडिङ शाखाको प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । पार्टी केन्द्रीय उपमहासचिव अजम्बर राई काङमाङले प्रशिक्षण दिनु भएको थियो ।

(२४) गत २१ सेप्टेम्बर २०१४ का साँझ लण्डनस्थित एक रेष्टुरेष्टमा पार्टीका अगुवा नेता तथा पार्टी कार्यकर्ताहरूलाई प्रशिक्षण दिइएको थियो । पार्टीको नीति तथा कार्यक्रम, संविधान निर्माण सम्बन्धमा पार्टीका धारणा तथा आगामी रणनीतिका बारेमा नेतात्रय महासचिव राजेन्द्र श्रेष्ठ, उपमहासचिव अजम्बर काङमाङ, प्रवास अङ्ग विभाग प्रमुख आङकाजी शेर्पा र केन्द्रीय सदस्य (सिफारिस) भगवान चाम्लिङले प्रशिक्षण दिनुभएको थियो ।

(२५) गत २० सेप्टेम्बर २०१४ का दिन सङ्घीय नेपाली समाज युकेको प्रथम ऐतिहासिक महाधिवेशन केन्द्रीय महासचिव राजेन्द्र श्रेष्ठ, उपमहासचिव अजम्बर राई र प्रवास विभाग प्रमुख आङकाजी

शेर्पाको उपस्थितिमा सुसम्पन्न भयो । धर्मबहादुर तामाङ अध्यक्ष र विश्वासहाङ खेवाहाङ महासचिव रहेको नयाँ नेतृत्व निर्वाचित भयो ।

(२६) हाल बहाल रहेका नेपाली सङ्घीय समाजका शाखाहरू र उक्त शाखा समितिका अध्यक्षहरू क्रमशः १. लण्डन शाखा अध्यक्षः पूर्ण लिम्बु फालेछ्वा । २. रसमोर शाखा अध्यक्षः रामधन राई । ३. रिडिङ शाखा अध्यक्षः तिलबहादुर गुरूङ । ४. मेडस्टोन शाखा अध्यक्षः गणेश गुरूङ । ५. आसफोर्ड शाखा अध्यक्षः विनोद सुब्बा । ६. ग्रेस शाखा अध्यक्षः विनोद राई । ७. स्वीन्डन शाखा अध्यक्षः बल्लभ गुरूङ र ८. फक्स्टोन शाखा अध्यक्ष जयबहादुर तामाङ रहनु भएको छ ।

**सङ्घीय समाज युकेका समस्या र चिन्ताका सवालहरू:**

हामी नेपालीहरूले चुनावलाई विशेष उत्सवको रूपमा लिने भएकाले चुनाव ताका बढी क्रियाशील र आक्रामक हुने गर्दछौं र चुनाउ सिद्धिएसँगै स्वभावैले चहलपहल पनि सेलाउने गर्दछ । सङ्घीय समाज युकेको पनि त्यस्तै मिल्दोजुल्दो अवस्था छैन भन्न मिल्दैन । यद्यपि पार्टी एकीकरणसँगै ऊर्जा पनि एकीकृत भएको छ । युकेव्यापी फैलिएका हाम्रा ७ शाखाहरू मध्ये केही क्रियाशील छन र एकाध क्रियाशील छैनन् । क्रियाशील नभएका शाखाहरूका पुराना पदाधिकारीहरूले बाटो खुल्ला नगरिदिनु पनि हामी सामु रहेको एउटा समस्या थियो तर यस दोस्रो ऐतिहासिक महाधिवेशनको सँघारमा विभिन्न शाखाहरूले सफलतापूर्वक अधिवेशन सम्पन्न गरी नयाँ नेतृत्व निर्माण भई अघि बढ्नु सुखद् पक्ष हो ।

सङ्घीय समाज युकेका मुख्य नेतृत्वकर्ताहरू अन्य सङ्घसंस्थामा नेतृत्वको रूपमा सक्रिय हुनु पनि अर्को समस्या हो । त्यस्तै पार्टीप्रति जिम्मेवार व्यक्तिहरू कुरा ठूलठूला र धेरै गर्ने तर युद्धस्तरमा नखट्ने अर्को समस्या हो । 'रहुँला कहाँ नेपाली हामी नेपालै नरहे' भनेझैं तल्लो तहमा पुगेर जनता, कार्यकर्तालाई भेट्न सक्दैनौं भने सङ्घीय समाज कसरी चल्छ ? र, सङ्घीय समाज नै निष्कृय हुन गए कुन समितिको नेता बनौंला ? त्यसैले कुरा भन्दा काम बढी हुनुपर्छ भन्ने लोकोक्ति सान्दार्भिक बनेको छ ।

**समाधानका बाटो तथा भावी कार्यदिशा:**

परिवर्तन आफैबाट सुरु गरौं भने झैं । सङ्घीय समाजका मुख्य नेतृत्वहरू अन्य सङ्घसंस्थाहरूको जिम्मेवारीबाट छुट्ने अर्थात अन्य सङ्घसस्थाका कामबाट छुट्कारा लिन र छुट्कारा लिन नमिल्ने भए यस समाजको नेतृत्व छोड्ने । सबैभन्दा महत्वपूर्ण राजनैतिक निष्कर्ष नै अन्तिम हुनेभएकोले राजनैतिक पार्टीको यस प्रवास अङ्गलाई महत्वपूर्ण ठानी अगाडि बढ्ने यो महाधिवेशन पास गर्दछ । साथै यस सङ्घीय समाजको प्रभावकारिता बढाउन र फैलाउनका लागि मुख्य कार्यकारी नेतृत्व बाहेक अन्य अनुकुल पदाधिकारीहरू विभिन्न सङ्घसंस्थामा

प्रतिनिधित्व पठाउने साथै ती संस्थाहरूमा प्रभावकारी भूमिकालाई सहयोग गर्ने यो महाधिवेशन पास गर्दछ ।

**दोस्रो**ः यसअघि निर्माण भएका शाखा समितिहरूले यस महाअधिवेशन अगावै अधिवेशन वा भेला गरी नयाँ नेतृत्व निर्माण गर्ने प्रचलनलाई निरन्तरता दिनु सुखद् पक्ष हो । यदि नयाँ नेतृत्व निर्माण गर्न नसकेको, नचाहेको खण्डमा महाधिवेशन भएको आजको दिनदेखि ३ महिना पछि शाखा समिति स्वतः खारेज भएको मान्ने र केन्द्रको पहलमा नयाँ समिति निर्माण गर्ने भनी यो महाधिवेशन पास गर्दछ । शाखा गठन भएको २ वर्ष नपुगेको हकमा भने यो कुरा लागु हुने छैन । हाम्रो पार्टी प्रति विश्वव्यापी जनलहर बढिरहेको र पार्टी प्रति आस्थावान सबैलाई समेट्न आगामी नयाँ नेतृत्वले शाखाहरू बढाई कम्तिमा १० शाखा पुऱ्याउने र युकेमा रहने पार्टी प्रति आस्थावानहरू अनुमानित ११ हजारबाट बढाई १५ हजार पुरयाउने यो महाधिवेशन जोडदार साथ पारित गर्दछ ।

किन राजनैतिक संलग्नता आवश्यक छ ? अहिले नेपालको संविधानभित्रका बेइमानहरू केके हुन ? आदि जानकारी दिन पार्टी नेता, कार्यकर्ता तथा आस्थावानहरूलाई राजनैतिक ज्ञान तथा प्रशिक्षणको विशेष पहल गर्ने । सङ्घीय समाज भन्ने वित्तिकै सैद्धान्तिक रूपमा स्पष्ट हुन्छन भन्ने प्रभावलाई अझ बढाउन अनिवार्य प्रशिक्षण कार्यहरू चलाउने । आगामी नेतृत्व चयनमा कुरा मात्र गर्नेलाई होइन काम गर्नेलाई स्थान दिने । मिडिया मैत्री चिन्तनमा ध्यान दिने । समाज (पार्टी) का नेतृत्वहरू कम्तिमा २ जनाको समूह भई कार्यकर्ता तथा शुभेच्छुकहरूको घरघर गई भेटघाट तथा सम्पर्कमा पुग्ने । सङ्घीय समाजभित्र धेरै योगदान गर्नेलाई कदर तथा सम्मानको प्रचलन बसाउने । जहाँ हेरचार त्यहाँ नियन्त्रण भने झैँ परिवारको सदस्यलाई माया गरौँ र सङ्घीय समाजलाई आफ्नो सबैभन्दा नजिक, विश्वासिलो तथा सहयोगी संस्था ठानौँ । राजनैतिक संस्था आस्थाको केन्द्र हो, आधार हो र अतिआवश्यक शक्ति पनि हो ।

अन्त्यमा, प्रत्येक दशकको अन्तरालमा ठूलठूला राजनैतिक आन्दोलन हुने गरेको पाइन्छ र अब यस दशकको आन्दोलनको जग उठ्दैछ । त्यसैले असफल तथा बेइमान नेपालको संविधानको खारेजी मात्र न्याय समानता र शान्ति, समृद्धिको सुरूवाती हुन सक्दछ । हामी परिवर्तनकामी शक्तिहरू निरन्तर अघि बढ्छौँ र परिवर्तन गर्न सक्दछौँ । त्यसैले सङ्घीय समाजवादी फोरम, नेपालको नेतृत्व तथा आबद्धतामा जारी आन्दोलन तथा कार्यक्रमलाई नेपाली सङ्घीय समाज युके हरप्रकारको सहयोग र सहकार्य गर्ने यो महाधिवेशन पारित गर्दछ । धन्यवाद ।

**विश्वासहाङ खेवाहाङ**

महासचिव

२५ सेप्टेम्बर २०१६, अल्डरसुट, युके

# Nepalese Federal Society

## Central Committee 2013 – 2016

## United Kingdom

1. President: Dharma Bahadur Tamang
2. SV/President: Janga Sunwar
3. V/president: Rajendra Khimding
4. V/president: Indra Karki,
5. V/president: Balkrishna Rai
6. V/president: Deb Gurung
7. V/president: Mrs Bashundhara Yakha
8. V/president: Yoges Rai
9. General Secretary: Biswashang Khewahang → BISWASDIP TIGELA
10. Deputy G/ Secretary: Kamal Prasad Rai
11. Secretary: Milan Rai
12. Secretary: Jagat Gurung
13. Secretary: Iswor Chamling
14. Treasurer: Mrs Bimla Kumari Rai
15. V/Treasurer: Dawa Gyamjo Shyangbow
16. Spokesman: Naresh Kangmang Rai
17. Member: Ratna Thapa Magar
18. Member: Chackra Rai
19. Member: Santabir Nembang
20. Member: Anita Gurung
21. Member: Sumitra Rai
22. Member: Dasharath Rai
23. Member: Shusila Waiba
24. Member: Jeet Pakhrin

25. Member: Januka Rai
26. Member: Tikadhan Rai
27. Member: Man Bahadur Rai
28. Member: Raj Rai
29. Member: Surya Karki
30. Member: Nabin Karki Thapa
31. Member: Bikesh Basnet khas

## Nepal Central Committee Members:

1. Bhagawan Chamling Rai
2. Tek Bahadur Thapa Rajesh

## Advisers:

Advisor: Prem Kumar Rai
Advisor: Shree Prasad Limbu
Advisor: Bhakta Dura
Advisor: Krishna Bahadur Rai
Advisor: Retd Maj Bhupjit Rai
Advisor: Bhakta Gurung
Advisor: Dilip Mahasheth
Advisor: Kamal Gurung
Advisor: Mrs Chhetrakal Rai
Advisor: Jiwan Prakash Rai
Advisor: Khagendra Yakkha Rai
Advisor: Bhanubhakta Rai
Advisor: Tara Bahadur Gurung
Advisor: Rajendra Khas

## INTELLECTUAL COMMITTEE

1. Intellectual Bidhya Kumar Panday
2. Intellectual Ekendra Gurung
3. Intellectual Kedar Sunuwar 'sanket'
4. Intellectual Ramesh Ghimire
5. Intellectual Shivadhan Rai

## Appointed Leaders

1. **Tamsaling Pradesh**
   Coordinator: Dawa Syangbo
   Vice Coordinator Mrs Shushila Waiwa
2. **Kirat Khambuwan Pradesh**
   Coordinator Bhanubhakta Rai
3. **Tamuwan Pradesh**
   Coordinator Kamal Gurung
4. **Youth :**
   Coordinator: Milan Chandra Rai
   Vice Coordinator: Balkrishna Rai
5. **Organisation**
   Coordinator: Biswashang Khewahang
   Vice Coordinator: Kamal Prasad Rai
6. **Woman Coordinator**
   Mrs Bashundhara Yakha
7. **Finance:**
   Coordinator: Janga Sunuwar
   Vice Coordinator: Bimla Kumari Rai
8. **Culture**
   Coordinator: Kisan Rai
   Vice Coordinator: Prakash Rai 'Praan'
9. **Discipline**
   Coordinator: Rajendra Khimding
   Vice Coordinator: Kamal Gurung
10. **Media:**
    Coordinator: Deb Bahadur Gurung
    Vice Coordinator: Januka Rai
11. **Party Schooling:**
    Coordinator: Bhagawan Chamling
    Vice Coordinator: Prem Kumar Rai
12. **Secretariat**
    President: Dharma Bahadur Tamang
    General Secretary: Biswashang Khewahang
    Duputy General Secretary: Kamal Prasad Rai

# Nepalese Federal Society UK

## FolkeQmone Branch Committee

## 20 August 2016

President: Jay Bahadur Tamang
Vice President: Bhakta Bahadur Rai
Secretary: Maha Prasad Rai
Assist Secretary: Hari Rai
Member: Siri Gurung
Member: Kumar Rai
Member & 2nd convention Rep: Rtd. Capt Suman Chandra Rai
Member & 2nd convention Rep: Rtd. Maj Deb bahadur Pun

**Advisors:**

Advisor: Shivadhan Rai

# Nepalese Federal Society UK

## Ashford Branch Committee:

## 16 August 2016

President: Binod Subba
Vice President: Prasna Rai
Secretary: Amit Thebe
Treasurer: Man Bahadur Mabohang
Member: Jitendra Chemjong
Member: Dambar Khajum
Member: Asai Rai
Member: Debraj rai
Member: Popiraj Rai
Member: Ram Rai

**Advisors:**

Advisor: Jiban Prakash Rai
Advisor: Rajendra Khimding
Advisor: Dil Sambahamphe
Advisor: Biswashang Khewahang

## Nepalese Federal Society UK

### Reading Branch 2nd Committee

### 9 November 2015

President: Til bahadur Gurung
Vice President: Bal bahadur Rai
Secretary: Bhim Gurung
vice Secretary: Lal Bahadur Sunuwar
Tresurer: Dambar Bahadur Bura
Assit Tresurer: Ganga Prasad Limbu
Member: Ram Prasad Gurung
Member: Raharman Rai
Member: Bhoj Bahadur Gurung
Member: Jum Bahadur Gurung
Member: Bhim Bahadur Gurung
Member: Mrs Sun Kumari Gurung
Member: Mrs Rutha Limbu
Member: Kesar Bahadur Thapa
Member: Buddhi Bahadur Ghale
Member: Narayan Sing Gurung
Member: Dhan Bahadur Gurung
Member: Lal Bahadur Gurung
Member: Em Bahadur Gurung

## Nepalese Federal Society UK

### Maidstone Branch Committee

### 1 October 2014

President: Ganesh Bahadur Gurung
Vice President: Ratna Kumar Gurung
Secretary: Devendra Rai
Assit Secretary: Dhiraj Rai
Treasurer: Harka Chamling

Member: Khadga Bahadur Thapa
Member: Mohan Bahadur Sunuwar
Member: Yam Bahadur Gurung
Member: Dhan Bahadur Sunuwar
Member: Tulsiram Thapa
Member: Bom Bahadur Limbu
Member: Bal Bahadur Gurung
Member: Harka Bahadur Limbu
Member: Buddhi Bahadur Rai
Member: Chakra Thapa

# Nepalese Federal Society UK

## London Branch 3rd Committee

## 02 Sep 2016

President: Purna Limbu
Vice president: Santakala Rai
Secretary: Lopsang Chiring Hyalmo Lama
Treasurer: Madan Koyo Rai
Member: Dhak Bahadur Rana Magar
Member: Santa Rai
Member: Sushma Rai
Member: Aanjana Rai
Member: Tek Gurung
Member: Raj Kumar Rai
Member: Tara Gurung
Member: Krishna Bahadur Rai
Member: Kumari Rai
Member: Bhuraj Rai
Member: Shubhas shresh Magar
Member: Khum Bahadur Garbuja Pun

Advisor: Chandra Bahadur Gurung
Advisor: Bom Prasad Rai
Advisor: Mukunda Sunuwar
Advisor: Gopal Krishna Rai

# Nepalese Federal Society UK

## Rushmor Branch Committee

1. President: Ramdhan Rai
2. Vice President: Chakra Bahadur Sunuwar
3. Secretary: Chandrabdr Rai
4. A/Secretary: Tilak Rai
5. Treasurer: Mrs Sabitri Rai
6. A/Treasurer Durganarayan Rai
7. Member Hom Sunuwar
8. Member Purna Sunuwar
9. Member Hari Rai
10. Member Kesharkmr Rai
11. Member Jaiprakash Sampang Rai

**Advisors**

Advisor: Mr Padam Rai

Advisor: Mr Thambdr Rai

# Nepalese Federal Society UK

## Swindon Branch Committee

President: Ballav Gurung

Vice President: Yam Gurung

Secretary: Jagat Gurung

Treasurer: Deb Gurung

Member: Ghan Rai

Member: Karna Bahadur Limbu

Member: Min Gurung

Member: Shiva Prasad Rai

**Advisors:**

Advisor: Bishnu Prasad Gurung

Advisor: Ram Kumar Limbu

Advisor: Deviram Rai




REWRITE THE CONSTITUTION AND MAKE IT FAIR.
NEPAL'S GOVERNMENT, STOP GENOCIDE.
THE NEPALESE GOVERNMENT BRUTALLY KILLED 55 (AUG-DEC 15) INNOCENT POLITICAL ACTIVISTS


It's a shame that the Nepalese government is refusing to give equal rights to their own people in the new constitution (2015). The Nepalese government have manipulated, misled and diverting interest of the Nepalese people. The blockade of trade route from India is actually the Nepalese people demanding and pressuring

